# आश्रम गतिविधि

१-६: चैत्र महिनाको १ देखि ९ गतेसम्म सम्म सम्पन्न विशेष गुरु मन्त्र हवन साधना।

७-११: मार्च २१ तारीखको दिन सम्पन्न दिव्य गुरु महोत्सव कार्यक्रम।

१२-१५: पूजनीय गुरुमाता भगवतीदेवी श्रीमालीज्यूको जन्मोत्सव कार्यक्रम।

● वर्ष ११ ● अङ्क ९ ● वैशाख २०६७ ● पूर्णाङ्क १२९


## सम्पर्क कार्यालयहरू


- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी, फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट, फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल, फोन: ०४६-५४००११
- **पाल्पा**, तानसेन, फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल, फोन:२२२००२१
- **गोरखा**, बसपार्क, फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा, फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१, फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक, फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा फोन: ९८४४०४०८९९
- **स्याङ्जा**, स्याङ्जाबजार फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी
- **काठमाडौं**, पुरानोबानेश्वर, फोन: ०१-२१०११२६
- **काठमाडौं**, सिमलटार
- **काठमाडौं**, तीनकुने (मुनि भैरव)
- **ललितपुर**, गोदावरी


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं

***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**

निखिल विशेष

मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, काठमाडौंमा रहेको छ । परमपूज्य सद्गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

## आश्रमका नियमित कार्यक्रमहरू

**प्रत्येक साँझ ५ बजे गुरु आरती । प्रत्येक बृहस्पतिबार बिहान १० बजे गुरु पूजन । प्रत्येक अंग्रेजी महिनाको २१ तारीख दिव्य गुरु महोत्सव कार्यक्रम । प्रत्येक महिनाको पहिलो सोमबार पशुपति मृगस्थलीस्थित श्री श्री महायोगी गुरु गोरखनाथको मन्दिर प्रांगणमा श्री शिव गोरक्ष हवन, पहिलो मंगलबार लगनखेलस्थित वटुक भैरव मन्दिर प्रांगणमा तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधबार लगनखेलस्थित महालक्ष्मी मन्दिर प्रांगणमा तान्त्रोक्त महालक्ष्मी हवन तथा पहिलो बिहीबार पाटन कुम्भेश्वरस्थित वगलामुखी मन्दिर प्रांगणमा तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम सञ्चालन । विभिन्न चाडपर्वहरूमा विशेष कार्यक्रम । गोरक्ष निखिल वाणी आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिकको प्रकाशन । विभिन्न एफ.एम. स्टेशनहरूमार्फत् गोरक्ष निखिल सन्देश रेडियो कार्यक्रम सञ्चालन । समाजमा आध्यात्मिक शिक्षा लागू गराउनका लागि गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको सञ्चालन । तान्त्रिक ध्यानका विभिन्न चरणका कक्षाहरू । समय समयमा विशेष साधना कार्यक्रमहरू । प्राणप्रतिष्ठित तान्त्रिक सामग्रीहरूको वितरण । समस्या समाधानका लागि परामर्श सेवा । असाध्य रोगका लागि तान्त्रिक हिलिङको व्यवस्था ।**

## परामर्श सेवासम्बन्धी सूचना

परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको असीम कृपास्वरूप सिद्धाश्रम शक्ति केन्द्रमा परामर्श सेवासम्बन्धी सुविधा निम्नानुसार रहेको जानकारी गराइन्छ ।

| बार | स्थान |
|---|---|
| आइतबार | काठमाडौँ (तीनकुने आश्रम) |
| आइतबार | भक्तपुर (कटुञ्जे आश्रम) |
| सोमबार | काठमाडौँ (बसुन्धरा आश्रम) |
| मंगलबार | ललितपुर (लगनखेल आश्रम) |
| बुधबार | काठमाडौँ (सिमलटार आश्रम |
| बिहीबार | काठमाडौँ (बानेश्वर आश्रम) |
| समयः अपराह्न ३:०० बजेपछि | |


**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**

सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग

ssk.org.np, info@ssk.org.np

**मुद्रण**

**भेराइटी प्रिन्टर्स प्रा.लि.**

कुलेश्वर, काठमाडौँ ।

**पत्रिकाको कार्यालय**

**बसुन्धरा, काठमाडौँ, नेपाल**

**फोन नं: ०१-४३८९१५४, पत्रिका वितरण फोन नं: ०१-६२२५१७७** (CDMA Phone), URL: gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा

सर्वप्रथम त नववर्ष २०६७ को पावन अवसरमा, परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको अवतरण महोत्सव एवं संस्थाको ११ औं वार्षिकोत्सवको पावन अवसरमा सम्पूर्णमा सुख, समृद्धिका साथमा भौतिक एवं आध्यात्मिक उन्नति प्रगति हुँदै जाओस् भन्ने हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं।

परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको यस धरामा अवतरणसँगै पृथ्वीवासीले उहाँलाई गुरुरुपमा मान्ने सौभाग्य प्राप्त गरे। उहाँको अवतरण आफैमा एउटा अद्वितीय घटना थियो, शिष्यहरुको लागि सुवर्ण अवसर थियो, सारा देवीदेवता, ऋषिमुनिहरुका लागि पनि सद्‌गुरुदेवको अवतरण आफैँमा गर्वको विषय थियो। दादा गुरुदेव स्वामी सच्चिदानन्द महाराजको आदेश निर्देशनलाई शिरोधार्य गर्दै विधाताको जिम्मेवारीलाई पूरा गर्न निखिलेश्वरानन्द महाराजको अवतरणको गूढ रहस्य छिपेको छ। परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको उच्चता, दिव्यता, महानता आदिको चर्चा मनुष्यको वशभन्दा धेरै परको विषय हो। निखिलेश्वर महादेवको रुपमा, निखिलेश शिवको रुपमा, महायोगीको रुपमा, यस्ता कैयौं उपाधिहरुले पनि उहाँको विराटताको अगाडि कुनै अर्थ राख्दैनन्।

यस्ता अद्वितीय, अवर्णनीय, युगपुरुषलाई गुरुरुपमा धारण गरी अगाडि बढ्न पाउनु हामी सबैको लागि गर्वको विषय हो। सन् १९३३ अप्रिल २१ तारीखमा परमपूज्य सद्‌गुरुदेव यस धरामा अवतरित भई सारा पृथ्वीवासीलाई सद्‌गुरुको अभावलाई पूर्ति गरिदिनुभएको थियो। यही दिव्य अवतरणसँगै २०५६ साल वैशाख ८ अर्थात् अप्रिल २१ बाट नै सिद्धाश्रम शक्ति केन्द्रको जन्म भएको हो। श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको असीम कृपा एवं आशीर्वादस्वरुप सिद्धाश्रम शक्ति केन्द्र नेपालको आजभन्दा दशवर्ष अगाडि स्थापना भएको थियो। दश वर्ष पार गरेर एघारौं वर्षमा प्रवेश गरेको यस पुनित अवसरमा यस संस्थालाई प्रत्यक्ष, अप्रत्यक्षरुपमा सहयोग गर्नुहुने शुभचिन्तक, भक्तजन, कार्यकर्ता, साधक साधिका सम्पूर्णलाई हार्दिक आभार प्रकट गर्दछौं।

सद्‌गुरुदेवको यस दिव्य अवतरण महोत्सवको पावनतम अवसरमा परमपूज्य सद्‌गुरुदेवहरुको चरणकमलमा कोटिकोटि नमन अर्पण गर्दै विगतका गल्ती, कमीकमजोरीका लागि क्षमा याचना गर्दै आउँदा दिनहरुमा संस्थाको स्वर्णिम भविष्यको निर्माण हुँदै जाओस् भन्ने प्रार्थना, आराधना गर्दछौं।

अन्तमा सद्‌गुरु अवतरण महोत्सव एवं संस्थाको वार्षिकोत्सवको पावनतम अवसरलाई भव्य एवं दिव्यरुपमा सम्पन्न गर्न लागेकोले यस कार्यक्रममा सहभागी भई सफल बनाउन हुन सम्पूर्णमा हार्दिक अनुरोध गर्दछौं।

यसपालिको अंकलाई हामीले 'निखिल विशेष'को रुपमा निकालेका छौं। निखिल स्वरुपको विराटतालाई शब्द चर्चामा, लेखनीमा उतार्न खोज्नु आफैमा धृष्टता हुनेछ। त्यसैले केही अंशरुपमा यस अंकमा जानकारी दिने कोशिश मात्रै हामीले गरेका छौं। यस क्रममा हामीबाट जान अन्जानमा भए गरेका गल्ती कमी कमजोरीको लागि परमपूज्य सद्‌गुरुदेव एवं यहाँहरुसमक्ष क्षमा याचना गर्दै आवश्यक सल्लाह, सुझाव र प्रतिक्रियाको अपेक्षा गर्दछौं। अस्तु।

परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ

मानव जीवनमा गुरुको सर्वथा उच्च स्थान मानिन्छ। गुरु प्राप्तिबिना मानव जीवन व्यर्थ छ। सम्पूर्ण शास्त्रको सम्यक् ज्ञान भए पनि, धन सम्पत्ति र रूप लावण्यले भरिपूर्ण भए पनि, समस्त प्रकारका सिद्धि, शक्ति र ऐश्वर्यले भरिपूर्ण भए पनि यदि गुरु प्राप्त भएको छैन भने मानिस अपूर्ण नै हुन्छ किनकि गुरुले नै संसार सागरबाट तारेर हामीलाई मोक्षको भागीदार बनाउनुहुन्छ, हामीलाई असीम आनन्दबाट तृप्त गरेर पूर्ण गरिदिनुहुन्छ। यसप्रकार पूर्णता, मुक्ति अनि अनगिन्ती सिद्धि र शक्ति प्रदान गर्नुहुने दुई सद्गुरुदेवहरूलाई सिद्धाश्रम शक्ति केन्द्रले धारण गरिरहेको छ। गुरुहरूको महिमा, गरिमा र परिचय कसले पो दिन सक्छ र ? तैपनि सामान्य जानकारीसम्मका लागि महान् गुरुहरूको संक्षिप्त परिचय दिएका छौँ–

### परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

*वन्दे नारायणं देवं सद्गुरुं निखिलेश्वरं।*
*ज्ञानामृतरसेनैव पूतं येनाखिलं जगत्॥*

यस विश्व ब्रह्माण्डलाई भौतिक एवं आध्यात्मिकरूपले सन्तुलित राख्न प्रकृतिद्वारा निर्मित अद्वितीय तपस्थली नै सिद्धाश्रम हो। मानव जीवनको अन्तिम ध्येय यस सिद्धाश्रमका प्राणाधार परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज हुनुहुन्छ। आफ्ना गुरु स्वामी सच्चिदानन्दज्यूको आदेश शिरोपर गरी 'धर्मसंस्थापनार्थाय...'को शंखघोष गर्दै उहाँ सन् १९३३ अप्रिल २१ तारीखमा भारतस्थित राजस्थान प्रान्तको जोधपुरमा अवतरित हुनुभयो। वेदाध्ययनबाट शिक्षा शुरु गर्नुभएका उहाँको विवाह बाह्र वर्षको उमेरमा भगवती देवीसँग भयो। आफ्नो जीवन परिवारको लागि मात्र नभएर सम्पूर्ण समाजको लागि हो भन्दै विवाहपश्चात् उहाँले थुप्रै वर्ष हिमालयका गुफा, विकट कन्दरा र जंगलहरूमा संन्यास जीवन बिताउनुभयो। त्यसबेला उहाँले विभिन्न स्वामी, संन्यासी, योगी, तान्त्रिक, मान्त्रिक, आयुर्वेदाचार्यहरूसँग भेटेर विभिन्न विधामा आफूलाई निष्णात् बनाउनुभएको थियो। संन्यास जीवनपश्चात् पुन: गृहस्थमा फर्केर आफूले प्राप्त गरेको आध्यात्मिक ज्ञानलाई समाजमा फैलाउने कार्य गर्नुभयो। यसको लागि सयौं पुस्तकहरूको रचना गर्दै असंख्य शिविर सञ्चालन गरी साधना, प्रवचन र दीक्षाको माध्यमबाट शिष्य निर्माण प्रक्रियालाई जोड दिनुभयो। यसरी ज्योतिष, सामुद्रिक शास्त्रका सुविज्ञ ज्ञाता, तन्त्र-मन्त्रका अन्तिम नाम, आधुनिक धन्वन्तरि, सम्मोहन विज्ञानका मसीहा, कुण्डलिनी शक्तिका सहज व्याख्याकार, सूर्य विज्ञानका अपूर्व ज्ञानी, धुरन्धर रत्न चिकित्सक आदिका रूपमा उहाँ **डा. नारायणदत्त श्रीमाली**को नामबाट विश्वमा विख्यात् हुँदै महामहोपाध्याय, मन्त्र शिरोमणि, समाज शिरोमणि, जगद्गुरु आदिको संज्ञाले विभूषित हुनुभयो। आगामी गोरक्ष निखिल युग निर्माणको महायोजना आफ्ना शिष्यहरूको काँधमा सुम्पेर सन् १९९८ जुलाई ३ मा महाप्रयाण लिई उहाँ आफ्नो मूल स्थान सिद्धाश्रम फर्कनुभयो। हाल सद्गुरुदेवकै सूक्ष्म आदेश निर्देशनबमोजिम सिद्धाश्रम शक्ति केन्द्र यस महान् योजनामा कटिबद्ध छ।

### श्री श्री महायोगी गुरु गोरखनाथ

*अनन्त कोटि ब्रह्माण्ड गोरक्ष स चराचम्।*
*दर्शनम् मुक्ति लाभं च तस्मै श्री गोरक्ष नमः॥*

श्री श्री महायोगी गुरु गोरखनाथ सम्पूर्ण गुरुहरूमा महागुरु, सम्पूर्ण योगीहरूमा महायोगी, सम्पूर्ण नाथहरूमा महानाथ हुनुहुन्छ। महायोगी श्री श्री गुरु गोरखनाथ भगवान् शिवका सबैभन्दा महत्त्वपूर्ण र प्रमुख अवतारको रूपमा पूजित हुनुहुन्छ। योग मार्गको प्रचारको लागि भगवान् शिवले नै गोरक्ष रूप धारण गर्नुभएको हो। यसैले उहाँलाई श्री शिव गोरक्षको रूपमा आदर-सम्मान गर्ने गरिन्छ। गो शब्दको अर्थभित्र समाहित गाई, पृथ्वी, इन्द्रिय, आदि सम्पूर्णको रक्षा गर्ने गोरक्ष नै हुनुहुन्छ। श्रीमद्भागवत, नारदपुराण, स्कन्दपुराण, ब्रह्माण्डपुराण, शिवपुराण, शाक्तप्रमोद, गोरक्षगीता आदिमा उहाँको बारेमा उल्लेख भएको छ। विश्वको इतिहासलाई हेर्दा उहाँको प्राकट्य सयौं हजारौं वर्षको अन्तरालमा विभिन्न स्थानमा भएको पाइन्छ। यसबारे विभिन्न विद्वान्हरूले थुप्रै अनुसन्धान गरेका छन्। आमाको कोखबाट नभई आवश्यकता अनुसार आफै प्रकट हुनुहुने महायोगी अजर अमर कायायुक्त हुनुभएको कुरा स्पष्ट हुन्छ।

नेपालको सन्दर्भमा हेर्दा गोरखा राज्यको नामाकरण उहाँको नामबाट भएको पाइन्छ भने उहाँकै आशीर्वादबाट यो राष्ट्र कहिल्यै पराधीन बन्नु नपरेको गौरवशाली इतिहास रहेको छ। उहाँको ऋण चुकाउन पनि हामीले उहाँको भक्ति गर्नैपर्दछ। नाथपंथका अग्रज महानाथ गुरु गोरखनाथ नेपालका राष्ट्रगुरु हुनुहुन्छ। नेपालमा विभिन्न ठाउँमा उहाँका मठ-मन्दिरहरू छन् जस्तै गोरखाको गोरख गुफा, पशुपतिको मृगस्थली पीठ, हनुमानढोकाको काष्ठमण्डप आदि। सिद्धाश्रम शक्ति केन्द्रको अनुसन्धानअनुसार गुरु गोरखनाथ सर्वप्रथम यस धरतीमा वैशाख शुक्ल पूर्णिमाको दिन गोरखाको गोरख गुफामा प्रकट हुनुभएको थियो। नेपालमा मात्र नभएर विश्वभर उहाँको सम्प्रदाय, मन्दिर एवं मठहरू स्थापित छन्। आगामी गोरक्ष निखिल युग निर्माणको लागि गोरक्ष शक्ति जगाउँदै नाथ परम्परालाई समाजमा स्थापित गर्न सिद्धाश्रम शक्ति केन्द्र गतिशील छ।

# सिद्धाश्रम शक्ति केन्द्र

## (आध्यात्मिक शक्ति अनुसन्धान संस्था)

सिद्धाश्रम शक्ति केन्द्र, आध्यात्मिक शक्ति अनुसन्धान संस्थाको स्थापना ०५६ वैशाख ८ गते भए पनि यसको विधिवत् दर्ता भने ०५६ वैशाख २३ गते मात्र भयो । परमपूज्य सद्गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई गुरुरूपमा धारण गर्दै यो संस्था शुरुमा केही वर्ष काठमाडौँको कमलादीबाट सञ्चालन भयो । त्यसपछि बत्तीसपुतली, पुरानो बानेश्वर हुँदै संचालन भएको यस संस्थाको केन्द्रीय कार्यालय हाल बसुन्धरामा रहेको छ ।

समस्त भूमण्डललाई गोरक्ष निखिल ऊर्जाले आपूरित गर्दै गोरक्ष निखिल युग स्थापनार्थ अघि बढिरहेको यस संस्थाले विभिन्न आध्यात्मिक गतिविधिहरूलाई अघि बढाइरहेको छ । मुलुकभर विभिन्न सम्पर्क कार्यालयहरूमार्फत आफ्ना गतिविधिहरू अघि बढाइरहेको यस संस्थाले विभिन्न ठाउँमा स-साना एकाइहरूको गठन गरेर पनि समाजमा आध्यात्मिक गतिविधिलाई अघि बढाइरहेको छ । संस्थाका विभिन्न सम्पर्क कार्यालयहरूमा बिहीबारको गुरु पूजन, दिव्य गुरु महोत्सव, विभिन्न चाडपर्वमा पूजनादि कार्यक्रमहरू सम्पन्न भइरहेका छन् भने विदेशमा रहेका यससँग सम्बन्धित एकाइहरूले पनि आध्यात्मिक गतिविधिमार्फत विश्वमा आध्यात्मिक शीतलता छरिरहेका छन् ।

संस्थाले प्रत्येक महिना काठमाडौं उपत्यकालगायत अन्य स्थानहरूमा रहेका विभिन्न शक्तिपीठ र मन्दिरहरूमा तान्त्रोक्त हवनहरू सञ्चालन गर्दै आइरहेको छ भने प्रत्येक वर्ष यस संस्थाले गोरखास्थित गोरख गुफामा श्री श्री महायोगी गुरु गोरखनाथको चरणकमलमा सवालाख रोट चढाउँदै आइरहेको छ । यसका अतिरिक्त कैयौं मन्त्र हवन साधना, तान्त्रोक्त साधना, ध्यान, महोत्सव आदिका कार्यक्रमहरू सञ्चालन गरिसकेको छ भने गोरक्ष निखिल वाणी मासिकलाई निरन्तररूपमा प्रकाशित गरिरहेको छ । एकातिर आध्यात्मिक पत्रिकामार्फत संस्थाले आध्यात्मिक गतिविधिलाई समाजसामु लगिरहेको छ भने अर्कोतिर गोरक्ष निखिल सन्देश नामक साप्ताहिक रेडियो कार्यक्रमबाट पनि यसले आफ्नो अभियानलाई तीव्र बनाइरहेको छ । समाजमा योग्य, सबल, चरित्रवान् नागरिकहरूको उत्पादनका लागि शैक्षिक मिशनअन्तर्गत गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम सञ्चालन गरिरहेको यस संस्थाका विभिन्न तह र तप्कामा रहेका कार्यकर्ताहरूका लागि मासिक प्रशिक्षण तथा तालिमको पनि व्यवस्था हुँदै आएको छ ।

हाल अ.ना.प. शैली अपनाएर अगाडि बढिरहेको यो संस्थाको सांगठनिक स्वरूपअन्तर्गत सम्पर्क कार्यालयहरूको सञ्चालन भइरहेको छ भने यसै शैलीभित्र क्षेत्रीय कार्यालयहरूको पनि विकास भइरहेको छ । संस्थाको विकास र विस्तार हुने क्रममा कतिपय सम्पर्क कार्यालयका आफ्नै भवन बनिसकेका छन् भने कतिपयमा भवनका लागि जग्गाको व्यवस्था भइसकेको छ । थुप्रै सम्पर्क कार्यालयहरूमा विभिन्न स्तरका ध्यानका कार्यक्रमहरूका अतिरिक्त परामर्श सेवालगायत तान्त्रिक हिलिङ्ग पनि सञ्चालन भइरहेका छन् । यसप्रकार यो केन्द्रले आध्यात्मिक युग निर्माणको दिशामा अग्रणी भूमिका निर्वाह गरिरहेको छ ।

# आत्मिक निवेदन

*आत्मीय पाठकवर्ग,*

*'गोरक्ष निखिल वाणी' पत्रिका यहाँहरुलाई कस्तो लागिरहेको छ? अनेक बाधा, अड्चन एवं समस्याहरुका बावजुद पत्रिकालाई निरन्तरता दिँदै प्रबुद्ध पाठकहरुको कसीमा आफूलाई घोट्दै शुद्धता एवं स्तरीयतामा क्रमशः वृद्धि गर्दै जाने हाम्रो संकल्प एवं प्रयास रहँदै आएको छ। भौतिकतामा चुर्लुम्म डुबेको आजको समाजमा एउटा आध्यात्मिक पत्रिकालाई नियमितता दिनु र आफ्नो खुट्टामा उभिन सक्ने बनाउनु भनेको निश्चय पनि असम्भवजस्तो लाग्दछ। तर परमपूज्य सद्गुरुदेवहरुको आशीर्वादले यो असम्भवलाई सम्भव बनाउने कार्य तपाईंहरुबाटै भइसकेको छ। पत्रिकालाई युगौं-युगसम्म जीवन्त राखी आउँदो पुस्तालाई हाम्रो आध्यात्मिक धरोहरको रुपमा हस्तान्तरण गर्ने जिम्मेवारी पनि तपाईं, हाम्रै काँधमा आएको छ।*

*प्रत्येक व्यक्ति स्वयं आध्यात्मिक पथमा अग्रसर भई आफ्नो परिवार, टोल, छिमेक, समाज, गाउँ, सहर, जिल्ला, अञ्चल हुँदै सम्पूर्ण देश अनि सम्पूर्ण विश्वलाई नै अध्यात्ममय बनाउने महान् अभियानलाई मूर्तरुप दिन पत्रिका सबैभन्दा सशक्त माध्यम बन्न सक्छ। अतः पत्रिका सदस्यता विस्तारको कार्यक्रममा यहाँहरुको सहयोगको अपेक्षा गर्दछौं।*

*पत्रिकाको बिक्री मूल्य रू. ३०।- मात्र भएकोले तपाईंले कम्तीमा दसवटा पत्रिका मगाएर आफ्ना नाता-गोता, छरछिमेकमा बाँड्न सक्नुहुन्छ। तपाईंको घर, टोल, छिमेक वा नातागोतामा कहीं पनि पूजा-आजा, हवन, विवाह, व्रतबन्ध, सप्ताह, जन्मदिन, मेला, पर्व, महोत्सव आदि हुँदैछन् भने त्यहाँ पत्रिकाको स्टल राखेर यसको महत्त्वबारे जानकारी गराउनुका साथै वार्षिक सदस्यताको लागि प्रेरित गर्न सक्नुहुन्छ।*

*यसका अलावा टाढा-टाढा रहेका आफ्ना नाता-गोता, मित्रजनलाई हुलाकमार्फत पत्रिका पठाउन सक्नुहुन्छ। यसो गर्दा आत्मिक सम्बन्ध अझ प्रगाढ हुन जान्छ।*

*यो पत्रिका यहाँहरुको आफ्नै भएकोले यसलाई फलाउने, फुलाउने र फैलाउने जिम्मा पनि यहाँहरुकै हो। यसैले, सम्पूर्ण पाठकहरुमा हाम्रो आत्मिक निवेदन छ– आफूलगायत कम्तीमा पाँचजना वार्षिक सदस्य बनाउने संकल्प आजकै दिनदेखि गरौं।*

*यहाँहरु सबैको सहयोगले पत्रिकाको सदस्य सङ्ख्या निरन्तररुपमा वृद्धि हुँदै जानेछ जसले गर्दा पत्रिकालाई अझ स्तरीय एवं आकर्षक बनाउन मद्दत मिल्नेछ भन्ने कुरामा हामी विश्वस्त छौं।*

*वार्षिक सदस्यताको लागि रु. ३५०।- (अक्षरेपी रु. तीन सय पचास मात्र) हामीलाई पठाउनुहोस्। त्यसपछिको बाँकी काम हामी गर्नेछौं।*

*अन्तमा, आत्मीय पाठकवर्गहरुमा विनम्र अनुरोध छ कि पत्रिकाको स्वयंले अध्ययन गरौं एवं आफ्नो परिवार तथा इष्टमित्रलाई पनि पढ्न अनुरोध गरौं। यसका अलावा अन्य पाँचजना व्यक्तिलाई पढाउने प्रयास गरौं।*

*संसारको सबैभन्दा ठूलो दान ज्ञान दान हो, तपाईंको सानो दानले कसैको जीवनमा नयाँ मोड आउन सक्छ, जीवनमा सदाबहार छाउन सक्दछ। त्यसैले परमपूज्य सद्गुरुदेवहरुको महान् योजनालाई मूर्तरुप दिँदै चरितार्थ गराउन आजदेखि गुरु कार्यमा सहभागी बनौं र यस योजनालाई आ-आफ्नो तरीकाबाट सहयोग गरौं।*

*पत्रिकाको बिक्री हाम्रो उद्देश्य होइन, अपितु परमपूज्य सद्गुरुदेवहरुको असीम अनुकम्पाले प्रत्येक जन-जनमा गोरक्ष निखिल ऊर्जाको सञ्चार गरी आध्यात्मिक युगको पुनः निर्माण गर्नु हो। अस्तु।*

# अवतरण रहस्य

सिद्धाश्रमका संस्थापक, सञ्चालक महान् योगीराज ‘स्वामी सच्चिदानन्द महाराज’ले विगत पच्चीस हजार वर्षको अवधिमा केवल तीन जना शिष्यहरू बनाउनुभएको छ किनकि उहाँको शिष्य बन्ने कसी आफैमा अत्यन्त कडा र दुर्जेय छ। यस्तो दिव्य सिद्धाश्रममा आज जताततै हलचल छ, समस्त फूलहरू मन्द-मन्द मुस्कुराइरहेछन्... वृक्ष र लताहरू पवनवेगका साथ नृत्यमय भइरहेका छन् र संन्यासी, साधक, संन्यासिनी आदि एकत्रित छन्। आज योगीराज स्वामी सच्चिदानन्दज्यू आफ्नो प्रधान तथा अत्यन्त प्रिय हृदयस्वरूप शिष्य स्वामी निखिलेश्वरानन्दलाई तत्त्वदीक्षा प्रदान गरी पूर्णता दिन जाँदै हुनुहुन्छ र आज उहाँ आफ्नो एउटा यस्तो निर्णयलाई स्पष्ट गर्न जाँदै हुनुहुन्छ जसको विषयमा सबैजना असमञ्जसमा परिरहेका छन् । वास्तवमा सिद्धाश्रमको यही परम्परा रहिआएको छ कि जगत्मा व्याप्त तमान्धकारलाई समाप्त पार्नको निम्ति यहाँबाट श्रेष्ठ ऋषिहरूलाई पठाइन्छ जो जगत्मा आई यहाँका दुःख, दैन्यहरू झेल्दै आफूलाई पलपल जलाउँदै ज्ञानको प्रकाश सर्वत्र छर्दछन्। यसै क्रममा ‘स्वामी हिरण्यगर्भ’लाई जब पठाइयो, भारतभूमिमा उहाँले ‘भगवत्पाद शङ्कराचार्य’को रूपमा जन्म लिई समस्त भूमिको कल्याण गरिदिनुभयो र आज जब योगीराज आफ्नो शिष्यलाई ‘तत्त्वदीक्षा’ प्रदान गर्न गइरहनुभएको छ भने उक्त दिव्य महासमारोहलाई सबैजना एकाग्रताका साथ नियालिरहेका छन् । स्वामी सच्चिदानन्दजी भनिरहनुभएको छ, अन्य सबै पूर्ण एकाग्रताका साथ सुनिरहेका छन्– “मलाई अत्यधिक आनन्द र हार्दिक प्रसन्नता भइरहेको छ कि जगज्जननी आमा नित्य लीला विहारिणीको अनुकम्पाबाट गएको सय वर्षपछि आज मलाई ब्रह्माण्डको गूढ, गोपनीय र परम दुर्लभ तत्त्वदीक्षा दिने अवसर मिलिरहेको छ । तत्त्वदीक्षा जीवनको पूर्ण श्रेष्ठतम र सर्वोत्तम दीक्षा हो, गएको दश हजार वर्षमा मैले तत्त्वदीक्षा दिने मानसिकता बनाएको यो तेस्रो अवसर हो किनकि यो दीक्षा कैयौँ-कैयौँ जन्मको तपस्या, पुण्योदय र साधनाको समन्वित स्वरूपबाट मात्रै प्राप्त हुन सम्भव छ। जब नित्य लीला विहारिणीको कृपाबाट अणु-अणु आफैमा चैतन्य, प्राणवान्, वेगवान् र ब्रह्माण्डमय हुन्छन्, तब साधकको तत्त्वज्ञान

वास्तवमा सिद्धाश्रमको यही परम्परा रहिआएको छ कि जगत्मा व्याप्त तमान्धकारलाई समाप्त पार्नको निम्ति यहाँबाट श्रेष्ठ ऋषिहरूलाई पठाइन्छ जो जगत्मा आई यहाँका दुःख, दैन्यहरू झेल्दै आफूलाई पलपल जलाउँदै ज्ञानको प्रकाश सर्वत्र छर्दछन् । यसै क्रममा ‘स्वामी हिरण्यगर्भ’लाई जब पठाइयो, भारतभूमिमा उहाँले ‘भगवत् पाद शङ्कराचार्य’को रूपमा जन्म लिई समस्त भूमिको कल्याण गरिदिनुभयो र आज जब योगीराज आफ्नो शिष्यलाई ‘तत्त्वदीक्षा’ प्रदान गर्न गइरहनुभएको छ भने उक्त दिव्य महासमारोहलाई सबैजना एकाग्रताका साथ नियालिरहेका छन् ।

दीक्षाको पथमा पहिलो पाइला बढ्नेछ, जब साधक गुरुको पूर्ण आन्तरिक कृपा र आशीर्वाद प्राप्त गरी सम्पूर्ण ब्रह्माण्डलाई आफ्नो हृदयमा र मुखमा स्थापित गर्ने क्रिया जान्दछ, तब यस तत्त्वज्ञान दीक्षाको पथमा उसको दोस्रो कदम अगाडि बढ्नेछ र जब साधक आफ्नो साधना बलको सहारामा सम्पूर्ण लोकहरूमा सशरीर विचरण गर्ने क्षमता प्राप्त गर्दछ, उसको लागि कुनै पनि कुरा अगम्य, अगोचर रहँदैन, तब यस देवपथमा उसको तेस्रो कदम अगाडि बढ्दछ । विगत दश हजार वर्षमा यो तेस्रो अवसर हो जसमा तेस्रो व्यक्ति यस दीक्षालाई प्राप्त गर्ने अधिकारी बन्न सकेको छ । यसबाट नै स्वत: कल्पना गर्न सकिन्छ कि यो दीक्षा आफैमा कति गूढ एवं जटिल र कठिन छ ।

साधनात्मक धरातल आफैमा अत्यधिक कठिन र तरवारको धारमा हिँड्नु जत्तिकै छ, जो व्यक्तित्व संन्यासको उच्च भावभूमिमा जिउन सक्छ, जो आफ्नो प्रयासले सिद्धाश्रममा प्रवेश गर्न सक्छ, जसको सामुन्ने समस्त साधनाहरू स्वत: नृत्य गरिरहन्छन्, ब्रह्म, अक्षर, शब्द र भाषामाथि जसले विशिष्ट अधिकार प्राप्त गर्न सक्दछ, जसको कण्ठमा वाग्देवी स्वत: विराजमान रहन्छिन् र जो अणिमा आदि अष्ट सिद्धिहरूलाई पूर्णताका साथ प्राप्त गरी सम्पूर्ण वेदान्त, उपनिषद् आदि शास्त्र-दर्शनको अधिकारप्राप्त व्यक्तित्व बन्दछ, जो कुनै पनि विषयमा धाराप्रवाह अनवरत्‌रूपबाट गतिशील हुने क्षमता राख्दछ, जसलाई परकाया प्रवेश, ब्रह्माण्ड-भेदन, सूर्य सिद्धान्त र नक्षत्र गति सम्यक् सिद्धिहरू प्राप्त हुन्छन्, ऊ नै यो तत्त्वदीक्षा प्राप्त गर्ने अधिकारी बन्दछ । जो साधना आदि क्षेत्रमा अलौकिक हुँदाहुँदै पनि सरल, निरहंकारी र सामान्य बनिरहने प्रक्रिया जान्दछ, जसले सयौँ, करौडौँ संन्यासी, ऋषिहरूलाई निरन्तर मार्गदर्शन गराउँदै यस पथमा अग्रसर गराउन सक्ने क्षमता प्राप्त गर्दछ, उसले नै 'तत्त्वदीक्षा' प्राप्त गर्ने क्षमता राख्दछ। जो विपरीत परिस्थितिहरूबीच पनि हिमालयझैँ अडिग रही चुनौतीहरूको प्रहारलाई आफ्नो छातीमा झेल्ने क्षमता राख्दछ, जो विपरीत परिस्थितिहरूबीच पनि प्रसन्नचित्त र शान्त बनिरहन सक्छ, जो हजारौँ सिद्धिहरू प्राप्त गरिसक्दा पनि सर्वथा सरल, निष्कपट र नि:स्वार्थ जीवन जिउने कला जान्दछ, उसैलाई

> निश्चयनै यो सङ्क्रमण काल हो । पूर्णतः विपरीत र दुर्गम, कठिन र यातनामय परिस्थितिहरूमा एकप्रकारबाट आलोचनाको दन्कँदो आगोमा म निखिललाई धकेलिरहेछु, दु:ख र बाधाहरूको सामुन्ने उसलाई अगाडि बढ्ने आज्ञा दिइरहेको छु, गाली, अपमान, आलोचनाहरूका अलावा यस वातावरणमा अरू केही छैन । अनास्था, पाखण्डको यस घनघोर अन्धकारमा म उसलाई पठाउँदै छु । मलाई विश्वास छ कि यस्तो विपरीत परिस्थितिमा पनि एक मात्र निखिलले नै मेरा सपनाहरू साकार पार्ने क्षमता राख्दछ र उसले निश्चयनै विजयश्री प्राप्त गर्न सक्दछ ।

तत्त्वदीक्षा दिइन्छ ।

र 'निखिल' जो मेरो हृदयको आधार र मेरो आत्माको प्रतिविम्ब हो, जसको कण-कणमा मेरो ज्ञान चेतनाको स्फुलिङ्ग विद्यमान छ, उसलाई तत्त्वदीक्षा दिन पाउँदा म अत्यधिक हर्षित र आनन्दमय छु। विगत छ हजार वर्षमा यो पहिलो अवसर हो कि मैले पुन: कुनै व्यक्तित्वलाई तत्त्वदीक्षायुक्त व्यक्तित्व मानिरहेको छु। मैले प्रत्येक कसीमा 'निखिल'लाई जाँचेर हेरेँ। ऊ प्रत्येकपटक अझ अधिक तेजस्वीरूपमा निखारिएर प्रस्तुत भयो। मैले जतिपटक उसमाथि प्रहार गरेँ, त्यति नै पटक ऊ अधिक सौम्यरूपमा मेरो सामुन्ने उपस्थित भयो। कठिनभन्दा कठिन साधनाहरूलाई उसले विपरीत परिस्थितिहरूबीच चुनौतीको रूपमा स्वीकार गर्दै सिद्धि प्राप्त गरेको छ । विकट, दुर्गम, हिमालयका सुदूर स्थानहरूमा पठाई मैले उसको धैर्यको परीक्षा लिने प्रयास गरेँ । यसमा पनि उसले पूर्ण सफलतापूर्वक आफ्नो शिष्यत्व सिद्ध गरेर देखायो, संन्यास जीवनमा उसले संन्यस्तको उच्च भावभूमिलाई स्पष्ट गर्‍यो । एकप्रकारबाट उसले सर्वथा विरक्त र वीतरागी जीवन जिउँदै आफ्ना शिष्यहरूलाई विपरीत परिस्थितिहरूबीच पनि जुन प्रकारले मार्गदर्शन गर्दै अगाडि बढायो, त्यो आफैमा स्तुत्य छ ।

निश्चय नै 'सिद्धाश्रम' ब्रह्माण्डको सर्वाधिक तेजस्वी र ज्योतिर्मय भू-भाग हो जसमाथि कालको कुनै प्रभाव व्याप्त हुँदैन, जहाँ ऋतुहरूको दु:खद परिर्वतन हुँदैन, जहाँको कण-कण आफैमा तेजस्वितायुक्त छ । यस्तो सिद्धाश्रमलाई पनि पूर्णताका साथ सजाउन, मनोरम र उच्चतम बनाउनमा निखिलले जुन कार्य गरेको

छ, त्यो आफैमा सराहनीय छ । एकप्रकारबाट भन्ने हो भने लगभग निश्चेष्ट सिद्धाश्रमको भूमिलाई उसले आफ्ना जीवन्त प्रयासहरूबाट सप्राण र आनन्दयुक्त बनाइदिएको छ, अब यो सिद्धाश्रम केवल बूढा संन्यासीहरूको साधनास्थली मात्र रहेन । अपितु हलचलयुक्त आनन्दमय त्यो भूमि बनेको छ जहाँ सिद्धयोगा तालको लहरमा, तरङ्ग र सङ्गीतमा निखिलको प्रयत्न स्पष्टरूपमा सुनिन्छ, चारैतिर जीवन्तता, मुस्कान, उमङ्ग र आनन्दको जुन प्रवाह प्रवाहित छ त्यसको पछाडि एक मात्र निखिलको प्रयास स्पष्टताका साथ दृष्टिगोचर भइरहेको छ, निखिलको प्रयत्नले नै देवकन्याहरू र देव-अप्सराहरूले आफ्नो कलाहरूको प्रदर्शन गर्ने सौभाग्य प्राप्त गरेका हुन् । निखिलको परिश्रमको फलस्वरूप नै यहाँका हजारौं वर्ष आयु प्राप्त संन्यासीहरूको शरीरमा वेगमय ऊर्जा प्रवाहित भइरहेछ, संन्यासिनीहरू, देवकन्याहरू, अप्सराहरूको विचरण, उनीहरूको नूपुर ध्वनि र मुस्कानका बावजूद पनि सर्वत्र संयम र अनुशासन विद्यमान छ, यो सब मात्र एक व्यक्तित्वको परिश्रम र प्रभावबाट सम्भव भएको हो । यसलाई स्वीकार गर्न मलाई कुनै सङ्कोच छैन ।

पूरा सिद्धाश्रमका योगीहरू, संन्यासीहरू, साधुहरू, अप्सराहरू, संन्यासिनीहरू र देवकन्याहरूको आँखामा निखिलको प्रतिविम्ब अहर्निश विद्यमान रहन्छ, उनीहरूको आँखामा हरपल निखिलको छवि विद्यमान छ । मैले देखेको छु कि जब ऊ सिद्धाश्रममा प्रवेश गर्दछ, तब उच्चकोटिका संन्यासी पनि उसको चरणधूलो लिन व्याकुल रहन्छन्, सबैको आँखामा एकै ललक, चाहना, मस्ती व्याप्त हुनुपुग्छ । एकप्रकारबाट पूरा सिद्धाश्रम नै मस्तीमा झुम्न थाल्छ । यस्तो बहुमुखी व्यक्तित्वलाई जब म स्वतः सिद्धिहरूको शीर्ष स्थानमा देख्दछु, तब मेरो हृदयमा रोमाञ्च र आनन्दको सागर लहराउन थाल्दछ ।

म निखिललाई तत्त्वदीक्षा दिनुको साथसाथै संसारको जटिल सङ्घर्षमय स्थितिहरूमा पठाउँदै छु । आज विश्व भौतिकताको विलासितामा आकण्ठ डुबेको छ, चारैतिर अन्धकार व्याप्त हुन थालेको छ, धर्म र अध्यात्मप्रति उनीहरूको आस्था न्यून हुन पुगेको छ, उनीहरूले भोगलाई नै पूर्णता मानेका छन् र साधना तथा सिद्धिहरूप्रति उनीहरूको मनमा सन्देह हुन थालेको छ, पूर्वजहरूप्रति कुनै सम्मान छैन र संन्यासी, योगीहरूको बेइज्जत हुन थालेको छ, भौतिकताको तिरिमिरिमा धर्म, दर्शन, योग, मीमांसा, ज्योतिष, आयुर्वेद एवं अन्य प्राचीन विद्याहरू लोप हुन लागेका छन् र यदि यही स्थिति रह्यो भने म देख्दैछु कि भारतवर्षबाट मन्त्र, तन्त्र आदि पूर्व विद्याहरू सर्वथा लोप हुन पुग्नेछन् र पूरा विश्व निश्चय नै कालको ग्रास बन्न पुग्नेछ ।

यस्तो समयमा एक तेजस्वी व्यक्तित्वको भारतवर्षलाई अवश्यकता छ जसमा धैर्य र संयम होस्, विपरीत परि स्थितिहरूमा पनि जुध्ने र विजय प्राप्त गर्ने जसमा क्षमता होस्, आलोचनाहरू र विरोधीहरूका बीचमा पनि जो सहिष्णु

'निश्चय नै 'सिद्धाश्रम' ब्रह्माण्डको सर्वाधिक तेजस्वी र ज्योतिर्मय भू-भाग हो जसमाथि कालको कुनै प्रभाव व्याप्त हुँदैन, जहाँ ऋतुहरूको दुःखद परिवर्तन हुँदैन, जहाँको कण-कण आफैमा तेजस्वितायुक्त छ । यस्तो सिद्धाश्रमलाई पनि पूर्णताका साथ सजाउन, मनोरम र उच्चतम बनाउनमा निखिलले जुन कार्य गरेको छ, त्यो आफैमा सराहनीय छ ।'

जीवन जिउने क्षमता राख्दछ । मैले यस्तो व्यक्ति एक मात्र निखिलको रूपमा देखिरहेछु र उसलाई यस सङ्घर्षमय संसारमा पठाउँदैछु जहाँ पुनः उसले भौतिकतामाथि अध्यात्म स्थापित गर्न सकोस्, भोगको सट्टा साधना स्थापित गर्न सकोस् र जो भारतवर्षको धर्तीमा गूढ विद्याहरूलाई पुनर्जीवित गर्दै जनजनमा त्यसलाई व्याप्त गर्न सकोस् ।

निश्चय नै यो सङ्क्रमण काल हो । पूर्णतः विपरीत र दुर्गम, कठिन र यातनामय परिस्थितिहरूमा एकप्रकारबाट आलोचनाको दन्कँदो आगोमा म निखिललाई धकेलिरहेछु, दुःख र बाधाहरूको सामुन्ने उसलाई अगाडि बढ्ने आज्ञा दिइरहेको छु, गाली, अपमान, आलोचनाहरूका अलावा यस वातावरणमा अरू केही छैन । अनास्था, पाखण्डको यस घनघोर अन्धकारमा म उसलाई पठाउँदै छु । मलाई विश्वास छ कि यस्तो विपरीत परिस्थितिमा पनि एक मात्र निखिलले नै मेरा सपनाहरू साकार पार्ने क्षमता राख्दछ र उसले निश्चयनै विजयश्री प्राप्त गर्न सक्दछ ।

'शङ्कराचार्य', 'गोरखनाथ', 'विश्वामित्र'को समयमा पनि यति विपरीत परिस्थितिहरू थिएनन् । तर निखिल ब्रह्मतत्त्वबाट ऊर्जित व्यक्तित्व हो, त्यसैले आफ्नो जीवन्तता, क्षमता र पौरुषको सहारामा स्वयं त सफल हुन्छ नै, साथसाथै हजारौं गृहस्थ शिष्यहरूलाई पनि पूर्णता प्रदान गर्न सक्नेछ ।

म आफ्नो हृदयस्थ आत्मस्वरूप 'निखिल'लाई तत्त्वदीक्षा दिन पाउँदा यस समयमा अत्यधिक गौरवान्वित अनुभव गरिरहेको छु, मेरो र नित्य लीला विहारिणी जगज्जननीको आशीर्वाद प्रत्येक क्षण उसको साथमा छ ।"

तत्त्वदीक्षा प्रदान गर्नुपूर्व स्वामी सच्चिदानन्दज्यूले जब भन्नुभयो कि सबै दिव्य योगीहरूको प्रिय निखिल, सबै साधकहरूको साध्य स्वामी निखिलेश्वरानन्द सिद्धाश्रम छोडेर संसारमा पल-प्रतिपल जल्नको निम्ति जानेछ, तब सबैको हृदयको धड्कन अडिन पुग्यो, त्यहाँ उपस्थित 'महर्षि भृगु' आफ्नो तीक्ष्ण दृष्टिले हेरिरहनुभएको थियो कि जहाँ सम्पूर्ण सिद्धाश्रम एकै झट्कामा यस निर्णयले थर्किन पुगेको थियो भने त्यहीँ 'स्वामी सच्चिदानन्दजी'को जिब्रो यस्तो निर्णय सुनाउँदा कामिरहेको थियो । तर पनि उहाँका प्रिय शिष्य 'निखिल'ले पूर्ण धैर्यपूर्वक सम्पूर्ण आदेशहरूलाई सुन्नुभयो । 'महर्षि भृगु'को उपस्थितिमा जब स्वामी सच्चिदानन्दजीले निखिललाई यी सबै आदेश सुनाउनुभयो, तब शिष्यको उत्तर थियो, "म लौकिक जीवनमा गृहस्थरूपमा रहेर हजूरको आज्ञालाई पूर्णता दिने प्रयास गर्नेछु । तर मैले त्यस समाजलाई देखेको छु, भोगेको छु । अहिले त्यो समाज छैन जुन पहिले थियो । पहिले त एउटा मात्र पादपद्म उत्पन्न भएको थियो जसले 'शङ्कराचार्य'लाई विष खुवाएर मारेको थियो । तर अहिले मेरो सामुन्ने सयकडौं पादपद्म शिष्य उपस्थित हुनेछन् । जानचाहिँ म अवश्यै जानेछु तर समाज र शिष्यहरूको जति विष मैले पिउनु पर्छ त्यो मलाई नै थाहा छ ।"

पूरा सिद्धाश्रममा पूज्य 'स्वामी सच्चिदानन्दजी'को यस कठोर आदेशले निस्तब्धता छाउन पुग्यो । तर निखिल निश्चिन्त थिए । एकदिन अवसर प्राप्त गरी उनले गुरुदेवसँग निवेदन गरे, "प्रभो !" हजूर मलाई पुनः गृहस्थमा पठाउँदै हुनुहुन्छ, यसको पछाडि कुनै न कुनै उद्देश्य छ होला, मलाई हजूरको आज्ञा शिरोधार्य छ । निश्चय नै म हजूरको जीवन वृत्तान्तलाई लिपिबद्ध गर्ने प्रयत्न गर्नेछु ।"

स्वामीजी भन्नुहुन्छ, "'निखिल', मेरो जीवन वृत्तान्त

कागजहरूमा होइन आफ्नो हृदयमा लेख्नू, वास्तवमा नै साधु, सन्त, महर्षिहरूको जीवनी कागजहरूमा होइन हृदयमा अंकित गर्न लायक हुनेछ ।"

उनले सोधेँ, "त्यस्तो भए म के गरूँ त ?"

गुरुदेवले भन्नुभयो, "तिमीलाई मैले गृहस्थमा पठाउनुको कारण यो छ कि देशमा र विश्वमा ज्योतिषशास्त्रलाई पुनर्जीवित गर्नु, साधना पक्षलाई चैतन्य गर्नु, मन्त्र शास्त्रप्रति व्यक्तिहरूको आस्था विकसित गर्नु..."

"र प्रभु !"

"पुस्तकहरू त लेख्नु नै तर यसको साथसाथै सजीव ग्रन्थ तयार गर्नु । यदि पूरा भारतभरिबाट मन्त्र-तन्त्र, योग साधना, ज्योतिष आदिको उत्थानमा आफ्नो जीवन समर्पित गर्न तयार बीस युवकहरू मात्र पनि तयार भए भने, परिश्रमपूर्वक साधना गर्ने कार्यमा विश्वास राख्ने खालका र तिम्रा विश्वासहरूको रक्षा गर्न समर्थ हुने खालका युवकहरू तयार भए भने तिमी आफ्नो परिश्रम सफल भएको सम्झनू ।"

"तर प्रभु ! आश्रमको जीवन जिउँदा-जिउँदा म यसैको अभ्यस्त भइसकेको छु र पुन: गृहस्थमा जाने कुरा स्मरण गर्दा पनि म दु:खी हुन पुग्छु । गुरुवर ! गृहस्थमा दु:ख, बाधाहरू, पीडाहरू, सङ्कट र कठिनाइहरू छन् । यदि कहिलेकाहीँ जरुरतभन्दा ज्यादा दु:ख र पीरहरू आए भने ?"

स्वामीजीले भन्नुभयो, "तिमी को हौ ? तिम्रो डोरी अरू कसैको हातमा छ । जरुरतभन्दा ज्यादा विपत्ति अनुभव भएमा सबैथोक एकैसाथ छोडिदिनु र इष्टदेवको चरणकमलमा साष्टाङ्ग दण्डवत् गर्दै लडिदिनु, बस ।"

स्वामीजीले आफ्नो शिष्यको वेदनालाई देखिरहनुभएको थियो, सम्झिरहनुभएको थियो । उहाँले एकदिन स्पष्ट गर्नुभयो, "पुत्र ! संन्यास जीवन एकाङ्गी जीवन हो, आज समाजलाई चैतन्य पार्नु आवश्यक छ, आद्यशक्ति माताका क्रियाहरू तथा भौतिक जगत्का स्थूल क्रियाकलापहरूमा संघर्ष उत्पन्न हुनाको कारण पाप, क्रोध, छल, कपट, असन्तोष, विग्रह आदि आसुरी प्रवृत्तिहरू व्याप्त हुन थालेका छन् र बिस्तारै-बिस्तारै यस भूमिमा आसुरी प्रवृत्तिहरूको विकास बढ्दै गइरहेको छ, यस्तो समयमा एकान्त-भोगी हुनाले जीवन निर्माणको पूर्ण उद्देश्य अपूर्ण रहन जानेछ । अहिलेको समयमा आवश्यकता यस कुराको छ कि स्थूल क्रियाकलापमा संलग्न मानवलाई सही मार्ग देखाउने प्रयत्न गरियोस् र उक्त आद्य प्रकाशलाई पुन: स्थापित गरियोस् जसबाट भूतलमा दया, करुणा, प्रेम, स्नेहको अमृत वर्षा हुन सकोस् । यो कार्य संन्यास जीवनमा रहेर गर्नु सम्भव छैन । यदि गृहस्थ व्यक्तिहरूको बीचमा रही कार्य गर्नु छ भने गृहस्थरूपमा रहेर मात्र गर्न सम्भव हुन्छ । यसकारण यस जीवनमा तिमीलाई गृहस्थमा प्रवेश गर्ने आज्ञा दिन मलाई बाध्य हुनुपर्‍यो, मलाई थाहा छ तिम्रो जीवनका तन्तु भोगमय नरहेर योगमय रहेका छन् तर पनि फेरि उनै जगज्जननी आमाको सङ्केतले तिमीलाई पुन: गृहस्थमा प्रवेश गर्ने कठोर आज्ञा मैले दिनुपर्‍यो । यद्यपि वत्स ! यस कुराले तिम्रो चित्तमा कठोर आघात परेको छ तर पनि यो प्रकृतिको मूल धर्मअनुरूप नै छ । तिम्रो मनमा यो दृढ सङ्कल्प हुनुपर्छ कि मैले त्यतिबेला मात्र पूर्णता अनुभव गर्न सक्नेछु जतिबेला यी समस्त विद्याहरूलाई म पुन: पल्लवित, पुष्पित गर्न सक्नेछु ।

गृहस्थमा तिमी आफ्नी पत्नीलाई पत्नीको रूपमा नलिई आद्याशक्तिको प्रकाशको एउटा कणका रूपमा लिनू । तिम्रो गृहस्थ गृहस्थ नभएर उनै लीला विहारिणीको एउटा कौतुक हो जुन समाजको लागि गृहस्थको पर्याय हुनेछ जबकि मेरो लागि त्यो एक सुखद कल्पना, एक अनुकूल आश्चर्य र आमा जगदम्बाको एक निर्लिप्त प्रकाश विन्दु । तिमीले लक्ष्य प्राप्त गर्नू, जतिसक्दो चाँडो मैले तिमीलाई आफू सामुन्ने बोलाउनु

छ र सदाको लागि यस सिद्धाश्रमलाई तिमीले सम्हाल्नु छ । तर यसको अगावै तिम्रो कार्यको पूर्णता हुनु आवश्यक छ, मलाई तिमीमाथि अगाध विश्वास छ ।"

समय बित्न कुनै बेर लागेन र आखिर त्यो दिन पनि आयो जुन दिन 'सिद्धाश्रम'बाट 'स्वामी निखिलेश्वरानन्द' बिदा लिन जाँदै हुनुहुन्थ्यो । सारा वातावरण बोझिलो थियो, पूरा 'सिद्धाश्रम' शान्त भएको बेलामा आँसुले भरिएका आफ्ना आँखाहरूले हेर्दै भाव-विह्वल हुँदै हिक्क-हिक्क गर्दै 'निखिल'ले गुरुदेवलाई भन्नुभयो– "गुरुदेव ! हजूरले मलाई बिर्सिनु त हुन्न ?"

'स्वामीजी' मुस्कुराउनुभयो र भन्नुभयो– "जब तिमीले मलाई स्मरण गरिरहन्छौ भने म कसरी तिमीलाई बिर्सिन सक्छु ।"

उहाँको यस सानो वाक्यमा कति गूढ अर्थ लुकेको थियो । 'स्वामी निखिलेश्वरानन्द' त जानको लागि तयार भइसक्नुभएको थियो । तर उहाँ त्यो व्यक्ति हुनुहुन्थ्यो जसको मुस्कुराहट तथा कार्यहरूबाट एउटा हलचल पूरा हिमालयभरि व्याप्त थियो । शिष्य व्यग्र, आतुर र उत्कण्ठ हुँदै उहाँको चारैतिर घेरिएर बस्दथे तर सिद्धाश्रमको आज्ञाले सोही व्यक्तित्व 'स्वामी निखिलेश्वरानन्द जी' पुनः संसारिक जीवनमा आउँदै हुनुहुन्छ भन्ने कुराले हिमालयको उपत्यका जब गुञ्जन पुग्यो, ज-जसले यो खबर सुने, तिनीहरू सबैमा एकप्रकारको शून्यता छायो । यस्तो लागिरहेथ्यो मानौँ शरीर अडिरहेको छ तर त्यसबाट प्राण निस्किएर गइसक्यो । सारा वनप्रान्त कता-कता हराएझैं भयो, सारा शिष्य हिँडडुल गर्ने लाशसमान भई विचरण गर्न थाले, ती सब शिष्यहरूको अगाडि आँखामा त्यो सारा विम्ब एकैपटक स्पष्ट हुन थाल्यो । अग्लो चट्टानमा 'गुरुदेव स्वामी निखिलेश्वरानन्दजी' बस्नुभएको छ । उहाँको सामुन्ने हजारौँहजार संन्यासी मन्त्र मुग्ध भई उहाँको प्रवचन सुनिरहेका छन् । उहाँ सबैसँग भेटदै, कुराकानी गर्दै, सान्त्वना दिँदै, उनीहरूको मनभित्रको कुरालाई उनीहरूकै अगाडि प्रष्टचाउँदै 'गुरु'को रूपमा मात्र प्रस्तुत नभई सुख-दुःखको साथी, विपत्तिहरूमा धैर्य दिलाउने, उदासीपनमा मुस्कान बाँडने मित्र, मार्गदर्शन दिने गुरु, मनका भावनाहरू स्पष्ट गर्ने साथी; यस्ता अनेकन् रूपहरू ती शिष्यहरूको अगाडि देखिन थाले । उहाँ सबै रूपहरूमा पूर्णता प्राप्त हुनुहुन्थ्यो, उहाँ जानुहुने कल्पना मात्रले पनि पूरा शरीर एउटा अचम्मको उदासीपन र शून्यताले भरिनपुग्यो ।

शिष्यहरू बुझिरहेका थिए कि उहाँको जानु केवल साधारण विछोड मात्र नभई त्यस स्थानमा एउटा यस्तो रिक्तता, एक यस्तो शून्यपन, एक यस्तो खालीपन व्याप्त हुनेछ जसको पूर्ति निकट भविष्यमा हुनु सम्भव छैन किनकि ती शिष्यहरूले अन्य सयौँ, करोडौँ संन्यासी र गुरुहरूलाई देखेका थिए जसमध्ये कोही पनि यस्तो थिएन जो एकैसाथमा समग्र रूपमा माता, पिता, भाइ, मित्र, सहायक, गुरु, सङ्गी बनी पूँजीभूत हुन सकोस् । जुन व्यक्तित्व यहाँबाट अहिले जाँदै हुनुहुन्छ, भविष्यमा उहाँको एक झलक पाउनसमेत मुश्किल हुनेछ, उहाँको अनुपस्थितिमा कसले विपत्तिहरूमा सान्त्वना दिँदै मार्गदर्शन प्रदान गर्ला, हाम्रो मनको कुरा बुझेर कसले हामीलाई तदनुकूल उपाय बताउला, हाम्रो निम्ति अब कसले लडाईं गर्ला यस्तो को नै छ जसले हामी साधक, शिष्यहरूको निम्ति आँसु बगाउला र ?

यिनै कुराहरू सोच्दै सारा शिष्य समुदाय उदास व्याकुल र क्लान्त थिए, यस्तो लागिरहेथ्यो कि जिउँदो माछालाई पानीबाट निकाली तातो बालुवामा राखिएको छ । जब 'गुरुदेव निखिलेश्वरानन्द' शिष्यहरूसँग बिदा लिएर अगाडि बढ्नुभयो सैयौँ-सैयौँ शिष्यहरू उहाँको मार्गमा लम्पसार परेर सुतिदिए, शिष्याहरूले आफ्नो लामो कपाल फिँजाएर बाटो ढाकिदिए । उहाँका आँखाबाट अविरल जल धारा प्रवाहित भइरहेथ्यो, गला अवरुद्ध थियो, छाती हिक्क हिक्क गर्दै बजिरहेको थियो, शिष्यहरूको मूक अन्तर्वेदनाले भन्दै थियो 'गुरुदेव' यदि हजूर जानुहुन्छ भने हाम्रा यी शरीरहरूमाथि टेकेर जानुहोस् , हजूरको पाउ हाम्रा यी शरीरहरूमा राख्दै जानुहोस्, यसरी जिउँदो अवस्थामा रही हजूरसँगको वियोग, विछोड, टाढापन न सहन गर्न सकिन्छ न यो सम्भव नै छ । त्यहाँ उपस्थित वरपरका पहाड, कन्दराहरूमा बस्ने योगीहरू, संन्यासीहरूले देखिरहेका थिए कि सारा वातावरण शून्य थियो, छटपटाहटयुक्त थियो, क्लान्त र व्याकुल थियो । वास्तवमा नै विछोड शब्द मुखबाट उच्चारण गर्नु जति सरल छ, हृदयमा आलो घाउ लिएर तड्पिनेहरूलाई मात्र थाहा हुन्छ वास्तवमा विछोडले दिने दुःखाइ, पीडा कति कष्टप्रद हुन्छ भन्ने कुरा ।

चारैतिरबाट वर्षिरहेका आँसुका धारा र वेदनापूर्ण सुस्केराले भरिएको चित्कारहरूको बीचवाट एक व्यक्तित्व बिस्तारै-बिस्तारै अग्रसर भइरह्यो... ।

जय गुरुदेव !

# युगावतार गृहस्थ योगी

# डा. नारायणदत्त श्रीमाली

चौरासी लाख योनिहरूमा जन्म लिँदा लिँदा अन्तिममा जीवले मनुष्य जन्म लिन पुग्दछ । मनुष्य योनि पनि अनेक रस, भोगमा लिप्त भएपश्चात् जब उसलाई जीवनको नि:स्सारता बोध हुन्छ, त्यही नै उसको ईश्वरको पथमा, आत्मकल्याण एवं परमानन्दको पथमा अघि बढेको पहिलो पाइला हुन्छ र यहीँबाट उसको खोज प्रारम्भ हुन्छ– परमात्माको स्वरूप के हो ? जुन प्रश्न सदैवदेखि नै ज्ञानीहरूको लागि एउटा विचारणीय विषय रहेको छ ।

जब जीवको पुकार तीव्र हुन जान्छ, तब प्रभुले अवश्य नै उसलाई कुनै न कुनै रूपमा कृतार्थ गर्नुहुन्छ र यसैको लागि समय समयमा मनुष्यरूपमा ईश्वरको अवतार हुँदै आइरहेको छ । शास्त्रमा परमात्माका, भगवान्का दशावतारको विवरण पाइन्छ, यी अवतार हुन्– कूर्मावतार, मत्स्यावतार, वाराह अवतार, वामनावतार, नृसिंहावतार, परशुराम, रामावतार, कृष्णावतार, बुद्धावतार ।

अवतारहरूको यही क्रममा अघि बढिरहेको शृंखलाको एउटा कथाको विवरण कल्कि पुराणको श्लोक क्रं १ देखि २२ सम्म पाइन्छ । नैमिषारण्यमा समस्त अवतारहरूको कथालीला, वार्तालाप महर्षि सूत एवं शौनकादि ऋषिहरूमा चलिरहेको थियो र ऋषिश्रेष्ठ सूतजीलाई शौनक मुनि प्रश्न गर्नुहुन्छ– बुद्धावतारपश्चात् जब कलियुग पराकाष्ठामा हुनेछ, तब भगवान्ले कुन शक्ति स्वरूपमा जन्म लिनुहोला ? यसको विवरण दिँदै सूतजी भन्नुहुन्छ– 'हे मुनीश्वरहरू ! ब्रह्माजीले आफ्नो पीठबाट घोर मलीन पातक उत्पन्न गर्नुभयो जसको नाम अधर्म राखियो । अधर्म जब ठूलो भयो, तब उसको विवाह मिथ्यासँग गरियो । दुवैको संयोगबाट महाक्रोधी पुत्र दम्भ र माया नामकी कन्याको जन्म भयो । फेरि दम्भ र मायाको संयोगबाट लोभ नामक पुत्र र विकृति नामक कन्याको जन्म भयो । यी दुवैबाट क्रोधको जन्म भयो । क्रोधबाट हिंसा र यी दुवैको संयोगबाट कालो शरीर भएको महाभयंकर कलिको जन्म भयो । कराल, चञ्चल, भयानक, दुर्गन्धयुक्त शरीर, द्यूत, मद्य, स्वर्ण र वेश्यामा निवास गर्ने यो कलिका बहिनीहरू एवं सन्तानको रूपमा दुरुक्ति, भयानक, मृत्यु, निरथ, यातनाको जन्म भयो । यिनका हजारौं अधर्मी छोराछारी आधिव्याधि, बुढ्यौली, दु:ख, शोक, पतन, भोगविलास आदिमा निवास गरी यज्ञ, तप, दान, स्वाध्याय, उपासना आदिलाई नाश गर्न थाले ।'

साँच्चै नै कलियुगमा यस्तै हुन लाग्यो– क्रोध, दम्भ, माया, मलीनता, व्याधि, भोग, पतन आदि स्थिति उत्पन्न भए र बिस्तारै बिस्तारै यिनीहरूले संसारलाई यतिसम्म ढाकिदिए जसको फलस्वरूप सामान्य मानिसले ईश्वरीय सत्तामाथि नै सन्देह गर्न थाल्यो । सम्भवत: महाभारत कालमा कृष्णले यस्तै स्थितिलाई बुझेर भन्नुभएको थियो–

**यदा यदा हि धर्मस्य ग्लानिर्भवति भारत,**
**अभ्युत्थानमर्धमस्य तदात्मानं सृजाम्यहम् ।**

अर्थात् जब जब संसारमा अनीति, अत्याचार, अधर्म पूर्णरूपमा व्याप्त हुन्छ, तब कुनै न कुनै रूपमा ईश्वरीय सत्ताको प्रादुर्भाव हुनेछ ।

जब त्रेता युगमा पारिवारिक मर्यादाहरूको हानि भइरहेको थियो, यज्ञ, तप मलीन भइरहेका थिए, तब परमात्मा भगवान् रामको रूपमा अवतरित हुनुभयो र मर्यादा स्थापित गर्नको लागि राजगृहमा जन्म लिएर पूरै आर्यावर्तको भ्रमण गर्नुभयो । वनवास रूपमा यो भ्रमण त एउटा लीला स्वरूप मात्र थियो, उहाँको मूल भावना त पूरै आर्यावर्तलाई अयोध्यादेखि लंकासम्म एक बनाउनु थियो । प्रत्येक स्थानमा पुनः वेद वाणीको गुञ्जन होस् र पुनः यज्ञ ज्योति प्रज्ज्वलित होस् । आफ्नो यस स्वरूपमा श्रीरामले कहीँ पनि कुनै जातिभेद, स्थानभेद गर्नुभएको छैन । वानर, भिल्ल, आदिवासी सबै नै उहाँका प्रिय थिए, र वनवास नै उहाँको सम्पूर्ण विचरण राष्ट्र थियो । पत्नीसँग पदयात्रा गरेर एउटा भावनात्मक अनुभूति जनमानसमा उत्पन्न गर्नुभयो, अनि उहाँले सबैलाई साथ लिँदै आसुरी प्रवृत्तिहरूको प्रतीक रावणको सम्पूर्ण नाश गर्नुभयो । केवल रावण मात्र नभई उसका जति पनि आसुरी प्रवृत्ति भएका सहयोगीहरू थिए, तिनीहरू सबैलाई जरैदेखि नाश गरी भूमण्डलमा शुद्ध धर्म स्थापित गर्नुभयो । श्रीरामले पनि विश्वामित्रबाट अस्त्र-शस्त्र विद्या सिक्नुभयो र ब्रह्मर्षि वशिष्ठबाट ज्ञान प्राप्त गर्नुभयो, त्यो पनि गुरुकुलमा रहेर ।

श्रीकृष्णले पनि आमाको कोखबाट जन्म लिनुभयो । एउटा बालकजसरी नै बाल लीलाहरू सम्पन्न गर्नुभयो, देवकीको गर्भबाट जन्म लिएर यशोदाको घरमा उहाँको बाल्यकाल व्यतीत भयो । आफ्नो बाल्यकालमा निरन्तर लीला गर्दै आसुरी प्रवृत्तिको नाश गर्नको लागि प्रवृत्त रहनुभयो । कालियामर्दन, पूतनावधजस्ता कार्य त उहाँले बाल्यकालमा नै सम्पन्न गर्नुभयो । द्वापरयुगमा मानव जीवनमा शुष्कता र द्वेषको बाहुल्यता भएको बेला उहाँले प्रेमको एउटा नयाँ अभिव्यक्ति दिनुभयो ।

उहाँको रासलीला, जसमा सम्पूर्ण भूमण्डल कृष्णमय हुँदै उहाँसँगै नृत्य संगीत गरिरहेको थियो, प्रेमको सर्वोत्कृष्ट अभिव्यक्ति थियो भने यसको साथै सुदूर सान्दीपन आश्रममा गएर शिष्यको रूपमा उहाँले शिक्षा ग्रहण पनि गर्नुभयो ।

**परमपूज्य सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यू यस्ता अद्वितीय एवं उदात्ततम व्यक्तित्व हुनुहुन्छ, जसको केवल चिन्तनले नै दिव्यताको बोध हुन थाल्दछ । प्रलयकालमा समस्त जगत्लाई आफूभित्र समाहित गर्नुभएका महात्मा हिरण्यगर्भझैँ शान्त र सौम्य हुनुहुन्छ उहाँ ।**

अवतारी पुरुषलाई शिक्षा आदि ग्रहण गर्ने र जीवनका सामान्य नियमहरूको पालन गर्ने आवश्यकता थियो र ?

तैपनि समाजको अगाडि आदर्श स्थापित गर्नु थियो र यसको लागि श्रीकृष्णको प्रेम स्वरूपको साथसाथै महाभारत युद्धको समयमा उहाँको व्यक्तित्वको नीतिज्ञ स्वरूप, युगनिर्माता स्वरूप पनि प्रकट हुन्छ । रामको समयमा रावणरूपी आसुरी प्रवृत्तिहरू प्रबल भएको जुन स्थिति थियो, ठीक त्यही स्थिति द्वापरमा दोहोरियो जब कौरवरूपी आसुरी प्रवृत्तिहरू बढ्दै पूरै भूमण्डलाई आफ्नो अधिकारमा लिएका थिए । तब श्रीकृष्णले आफ्नो विराट् स्वरूपको माध्यमबाट अर्जुनलाई ज्ञान दिनुभयो- संख्या बल महत्वपूर्ण होइन, बरु धर्मको स्थापना महत्वपूर्ण छ जसको लागि जीवनको बलिदान नै किन गर्नु नपरोस् । यदि सत्य र धर्म तिमीसँग छन् भने आसुरी प्रवृत्तिहरूले कहिल्यै पनि विजय प्राप्त गर्न सक्दैनन् । महाभारतको युद्ध इतिहास परिवर्तनको युद्ध थियो । पुनः आर्यावर्तमा धर्मको चेतना जागृत भयो, सामाजिक जीवनलाई नष्ट गर्ने विलासिता, जुवा, मद्यपान, नारी अपमानका प्रवृत्तिहरू नष्ट भए ।

सम्पूर्ण जीवनमा कृष्णले कुनै पनि प्रकारको सामाजिक आचारसंहिताको उल्लंघन गर्नुभएन । गृहस्थ जीवन पनि धारण गर्नुभयो र जब उहाँले गोकुल, मथुरा, हस्तिनापुरमा आफ्नो कार्य पूर्ण भएको अनुभव गर्नुभयो, तब सुदूर द्वारकामा राज्य स्थापना गरी त्यहाँ धर्मको स्थापना गर्नुभयो जसबाट अखण्ड आर्यावर्तको निर्माण हुन सकोस् ।

कालचक्र निरन्तर घुमिरह्यो र यही आर्यावर्त ससाना राज्यहरूमा टुक्रिन पुग्यो । प्रत्येक राज्यमा द्वेष, हजारौँ प्रकारका धर्म सिद्धान्त, हजारौँ प्रकारका पूजाहरू, नास्तिकता आस्तिकताको संघर्ष हुन लाग्यो । तब प्रभुले बुद्धको रूपमा जन्म लिनुभयो र उहाँको जीवन यात्रा सिद्धार्थको रूपमा जन्म लिएर बोधिसत्व प्राप्त गरी अन्ततः तथागत स्वरूप प्राप्त गरुञ्जेलसम्मको एउटा विराट् यात्रा थियो । यस दौरानमा उहाँले तीन

सिद्धान्तहरू जनमानसमा स्थापित गर्नुभयो-

**बुद्धं शरणं गच्छामि, संघं शरणं गच्छामि, धम्मं शरणं गच्छामि**

अर्थात् खण्ड-खण्डमा टुक्रिएर रहनुको सट्टा संघ बनाउनु आवश्यक छ, संघ बनाएर धर्मको पालन गर्नु आवश्यक छ र धर्मको पालन शुद्ध सात्विक बुद्धि, जसले बुद्धत्व उत्पन्न गर्दछ, द्वारा मात्र सम्भव छ । त्यसबेलाको माग जनमानसमा त्याग, करुणा, प्रेम, साहचर्य उत्पन्न गर्नु थियो र क्षत्रीय परिवारमा जन्म लिएर बुद्धले भिक्षुक भेष धारण गरी भिक्षा पात्र हातमा लिएर पूरै आर्यावर्त र बाहिरका सुदूर देशहरूमा पनि धर्मको स्थापना गर्नुभयो । उहाँले स्वयं कहिल्यै सम्राट पद धारण गर्नुभएन, तर सारा सम्राटहरू उहाँकै अधीन थिए। उहाँ त जनजनका सम्राट हुनुहुन्थ्यो, र नहुनु पनि किन जब उहाँले आफ्नो ईश्वरीय स्वरूपको विस्तार यसप्रकार गर्नुभयो जसबाट पुनः एकता, साहचर्य एवं धर्म स्थापित हुन पुग्यो ।

यी तीन महावतारहरूमा पूर्ण भिन्नता दृष्टिगोचर हुन्छ किनकि युगधर्मअनुसार भगवान् भिन्न भिन्न स्वरूपमा प्रकट हुनुहुन्छ । जहाँ जस्तो प्रकारको कार्यको आवश्यकता हुन्छ, भगवान् युगपुरुषको रूपमा, युग-द्रष्टाको रूपमा अवतरित हुनुहुन्छ र जुन उद्देश्यको लागि अवतरण लिनुहुन्छ, त्यो कार्य पूरा गरिसकेपछि पुनः ब्रह्माण्डमा आफ्नो विराट् स्वरूपमा स्थित हुन पुग्नुहुन्छ ।

प्रभुले जब जब अवतरण लिनुहुन्छ, तब उहाँले संसारलाई एउटा सन्देश दिन खोज्नुहुन्छ– जीवनको आदर्श के हुनुपर्छ र मनुष्य जन्म लिएर आफ्नो जीवनमा परमात्माको अविच्छिन्न शक्तिको प्रतीक बनेर संसारमा सत्कार्य गर्न सकिन्छ । असम्भवलाई सम्भव बनाउन सकिन्छ, एउटा एउटा गरेर आफ्नो मार्गमा आउने बाधाहरूलाई हटाउन सकिन्छ । उसको जीवनमा पनि प्रेम, करुणा, मोह, गृहस्थ सबै रहनेछन् नै, यी सबै स्थितिहरूलाई सँगै लिएर ऊ सात्विकतातर्फ अग्रसर हुन सक्छ, पूर्णत्वतर्फ अग्रसर हुन सक्छ ।

आफ्नो आराध्यलाई कुन रूपमा हेर्दछ, यो त द्रष्टामा निर्भर छ र यो अवतरणको क्रम

**जब उहाँ बोल्नुहुन्छ तब यस्तो लाग्छ स्वयं ब्रह्मा आफ्नो मुखबाट वेद उच्चरित गरिरहनु भएको छ, किनकि मैले उहाँको ब्रह्मस्वरुप पनि देखेको छु, रुद्रस्वरुप पनि देखेको छु, र उहाँको रौद्रस्वरुपको साक्षी पनि रहेको छु ।**

अघि बढ्दै आजको युगमा 'डा. नारायणदत्त श्रीमालीज्यू'को रूपमा पुनः सम्भव भएको छ । पूज्य सद्गुरुदेव आफ्नो परिवारको लागि पिता, भाइ आदि स्वरूपमा प्रिय बन्नुभयो भने शिष्यहरूले उहाँलाई सद्गुरुदेव, प्रभु, इष्ट, मन्त्रज्ञ, तन्त्रज्ञ, ज्योतिषविद् तथा अन्य रूपहरूमा आत्मसात् गरेका छन् ।

ब्रह्मवैवर्त पुराणमा व्यास मुनिले स्पष्ट लेख्नुभएको छ भगवान्का अवतारी स्वरूपमा निम्न दश गुणहरू अवश्य नै परिलक्षित हुनेछन् र यिनै दश गुणहरूको आधारमा संसारले उहाँलाई चिन्नेछ–

**तपोनिष्ठः मुनिश्रेष्ठः मानवानां हितेक्षणः ।**
**ऋषिधर्मत्वमापन्नः योगी योगविदांवरः ॥**
**दार्शनिकः कविश्रेष्ठः उपदेष्टा नीतिकृत्तथा ।**
**युगकर्तानुमन्ता च निखिलः निखिलेश्वरः ॥**
**एभिर्दशगुणैः प्रीतः सत्यधर्मपरायणः ।**
**अवतारं गृहीत्वैव अभूच्च गुरुणां गुरुः ॥**

सद्गुरुदेव पूज्यपाद डा. नारायणदत्त श्रीमालीज्यू, संन्यासी स्वरूप निखिलेश्वरानन्दजीको जीवनको विवेचन आज यदि महर्षि व्यासद्वारा उद्धृत दश गुणहरूको आधारमा गर्ने हो भने निश्चय नै सद्गुरुदेव अवतारी पुरुष हुनुहुन्छ, जसले आफ्नो सांसारिक जीवनको प्रारम्भ एउटा सुसंस्कृत ब्राह्मण परिवारबाट गर्नुभयो- सुदूर पिछडिएको मरुभूमितुल्य गाउँ थियो त्यो । जब उहाँको जन्म भयो, तब मातापितालाई यो तेजस्वी बालकको नाम 'नारायण' राख्ने प्रेरणा प्राप्त भयो ।

नारायण नाम धारण गर्नु र त्यो नारायण तत्वको निरन्तर विस्तार गर्नु केवल युगपुरुष नारायणदत्त श्रीमालीको लागि मात्र सम्भव थियो, जसले आफ्नो अल्पकालीन भौतिक जीवनमा शिक्षाको उच्चतम आयाम ग्रहण गरी पि.एच.डी. अर्थात् डक्टरेटको उपाधि प्राप्त गर्नुभयो ।

परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यू यस्ता अद्वितीय एवं उदात्ततम व्यक्तित्व हुनुहुन्छ, जसको केवल चिन्तनले नै दिव्यताको बोध हुन थाल्दछ । प्रलयकालमा समस्त जगत्लाई आफूभित्र समाहित गर्नुभएका महात्मा हिरण्यगर्भझैं शान्त र सौम्य हुनुहुन्छ

उहाँ । व्यावहारिक क्षेत्रमा स्वच्छ धौत वस्त्रमा सुसज्जित उहाँ जति सीधासादा देखिनुहुन्छ, यसभन्दा पर उहाँ केही अर्कै पनि हुनुहुन्छ जुन सर्वसाधारण गम्य छैन । साधनाको उच्चतम सोपानमा स्थित विश्वका परिचित एवं सम्मानित व्यक्तित्व हुनुहुन्छ । उहाँको साधनात्मक क्षेत्र यति विशालतम छ जसलाई शब्दको माध्यमले आँकलन नै गर्न सकिँदैन । कुनै पनि प्रदर्शनबाट टाढा, हिमालयझैं अडिग, सागरझैं गम्भीर, फूलझैं सुकोमल एवं आकाशझैं निर्मल हुनुहुन्छ ।

महर्षि जह्नुझैं आफूभित्र ज्ञानगंगाको असीम प्रवाहलाई समेटेर रहनुभएका उहाँको सम्पर्कमा आएको व्यक्ति एकपटक त उहाँलाई देखेर अचम्ममा पर्छ ।

पूज्य सद्गुरुदेव ऋषिकालीन प्राच्य ज्ञान परम्पराका अद्वितीय कडी हुनुहुन्छ । जुन ज्ञान मध्यकालमा अनेक घात प्रतिघातको कारण अविच्छिन्न, निष्प्राण हुन पुगेको थियो, जुन दिव्य ज्ञानको छहारीमुनि समस्त मानव जातिले सुख, शान्ति एवं आनन्दको अनुभव गरेको थियो, जुन ज्ञानको सम्बल पाएर सबै नै गौरवान्वित भएका थिए र समस्त विसंगतिहरूलाई परास्त गर्न सक्षम भएका थिए, जुन ज्ञानलाई हाम्रा ऋषिहरूले आफ्नो तप: ऊर्जाले सबल एवं परिपुष्ट गरी जनकल्याणको हितार्थ स्वर्णिम स्वप्न देखेका थिए, पूज्यपाद सद्गुरुदेव श्रीमालीज्यूले समाजको प्रत्येक विषमतासँग जुध्दै, आफूलाई पलपल जलाउँदै त्यही ज्ञान परम्परालाई पुन: जाग्रत गर्नुभएको छ, समस्त मानवजातिलाई एउटै सूत्रमा उनेर उहाँले पुन: त्यस ज्ञान प्रवाहलाई साधनाको माध्यमबाट आप्लावित गर्नुभएको छ । मानव कल्याणको लागि आँखामा अथाह करुणा लिएर मन्त्र एवं तन्त्रको माध्यमबाट, ज्योतिष, कर्मकाण्ड एवं यज्ञको माध्यमबाट, शिविर तथा साधनाको माध्यमबाट उहाँले यो ज्ञानलाई जनजनसम्म पुऱ्याउनुभएको छ ।

यस्ता महामानवसम्बन्धी केही बोल्नु र लेख्नुअघि धेरै सोचविचार गर्नुपर्दछ । जीवनको प्रत्येक आयामलाई स्पर्श गरेर पनि सबै उद्वेगबाट रहित जो रामझैं मर्यादित, कृष्णझैं सतत चैतन्य, सप्तर्षिझैं सतत भावगम्य अनन्त तप: ऊर्जाबाट सम्बलित यस्ता सद्गुरु डा. नारायणदत्त श्रीमालीज्यूको नै संन्यासी स्वरूप स्वामी योगीराज परमहंस निखिलेश्वरानन्दजी हुनुहुन्छ ।

बाहिरी शरीर हेर्दा उहाँलाई गृहस्थ ठान्न सकिएला, बाहिरी शरीरबाट उहाँले सुखदु:खको अनुभव गर्दै, हाँस्दै, उदास हुँदै पारिवारिक जीवन व्यतीत गर्दै वा शिष्यहरूसँग जीवनका क्रियाकलाप सम्पन्न गर्नुहोला, तर यो त उहाँको बाहिरी शरीर हो । उहाँको आभ्यन्तरिक शरीर त स्वयंमा

चैतन्य, सजग, सप्राण, पूर्ण योगेश्वरको शरीर हो जसलाई एक-एक पलको ज्ञान छ र यस दृष्टिबाट उहाँ हजारौं वर्षको आयु प्राप्त योगीश्वर हुनुहुन्छ जसको यदाकदा पृथ्वीमा जन्म हुने गर्दछ ।

लगभग १५०० वर्षदेखि म उहाँको साक्षीभूत शिष्य हुँ र मैले यी १५०० वर्षमा उहाँलाई चिर यौवन, चिर नूतन एउटा संन्यासीको रूपमा देखेको छु । बाहिरी रूपमा उहाँले थुप्रै चोला बदल्नुभयो, थुप्रै स्थानमा जन्म लिनुभयो तर यो मेरो विषय थिएन, मेरो विषय त थियो– म उहाँको आभ्यन्तरिक जीवनसँग साक्षीभूत रहूँ, एउटा संन्यासी जीवनको संसर्गमा, सम्पर्कमा रहूँ र उहाँको त्यो संन्यासी जीवन स्वयंमा उच्च, उदात्त, दिव्य र अद्वितीय रहेको छ ।

उहाँले जुन साधनाहरू सम्पन्न गर्नुभएको छ, ती स्वयंमा अद्वितीय छन्, हजारौं योगीहरू पनि उहाँको अगाडि नतमस्तक रहन्छन् किनकि ती योगीहरू उहाँको आभ्यन्तरिक जीवनसँग परिचित छन् । उनीहरूले बुझेका छन् कि उहाँको यो व्यक्तित्व स्वयंमा अद्वितीय छ, अनौठो छ, उहाँसँग साधनात्मक ज्ञानको एउटा विशाल भण्डार छ, यति विशाल कि ती योगीले सयौं वर्षसम्म उहाँको सम्पर्क र साहचर्यमा रहेर पनि त्यो ज्ञान पूर्णरूपले प्राप्त गर्न सक्दैनन् । प्रत्येक वेद, पुराण, स्मृति उहाँलाई स्मरण छ, र जब उहाँ बोल्नुहुन्छ तब यस्तो लाग्छ स्वयं ब्रह्मा आफ्नो मुखबाट वेद उच्चरित गरिरहनुभएको छ, किनकि मैले उहाँको ब्रह्मस्वरूप पनि देखेको छु, रुद्रस्वरूप पनि देखेको छु, र उहाँको रौद्रस्वरूपको साक्षी पनि रहेको छु ।

आज पनि सिद्धाश्रमको प्रत्येक योगीले अनुभव गर्दछ– निखिलेश्वरानन्दजी हुनुहुन्न भने सिद्धाश्रम पनि छैन

किनकि निखिलेश्वरानन्दजी त्यस सिद्धाश्रमको कणकणमा व्याप्त हुनुहुन्छ । उहाँ कसैलाई वात्सल्य दिनुहुन्छ, कसैलाई हकार्नुहुन्छ, कसैलाई प्रेम गर्नुहुन्छ– केवल यसकारण कि उसले केही सिकोस्, केवल यसकारण कि उसले केही बुझोस्, केवल यसकारण कि उसले जीवनमा पूर्णता प्राप्त गरोस्, र योगीजन उहाँको नजिक बस्दा अत्यन्त शीतलताको अनुभव गर्दछन् । यस्तो लाग्दछ मानौं एकैसाथ ब्रह्मा, विष्णु र महेशसँग बसेका छौं, एकैसाथ हिमालयको काखमा बसेका छौं, एकैसाथ सम्पूर्ण ब्रह्माण्डलाई समेटेर रहेका जो व्यक्तित्व हुनुहुन्छ, उहाँको नजिक बसेका छौं ।

रामको समयमा रामलाई चिनिएन, त्यसबेलाको समाजले रामको कदर, उहाँको मूल्यांकन गर्न सकेन, उहाँ जंगल जंगल धाउँदै रहनुभयो । कृष्णसँग पनि यस्तै भयो, उहाँलाई पीडित गर्न कुनै कसर बाँकी रहेन र एउटा क्षण यस्तो पनि आयो जब उहाँले मथुरा छोडेर द्वारकामा शरण लिनुपर्‍यो र त्यसबेलाको समाजले पनि उहाँको कदर गर्न सकेन । बुद्धको समयमा जति वेदना बुद्धले झेल्नुभयो, समाजले त्यसको वास्ता गरेन । महावीरको कानमा किला ठोकियो, उहाँलाई भोकै मर्नको लागि विवश पारियो, समाजले उहाँको महत्व आँकलन नै गरेन ।

यदि सही अर्थमा श्रीमालीज्यूलाई बुझ्ने हो भने उहाँको निखिलेश्वरानन्द स्वरूपलाई बुझ्नुपर्दछ । यी चर्मचक्षुले उहाँलाई चिन्न सकिँदैन, त्यसको लागि त आत्मचक्षु वा दिव्य चक्षुको आवश्यकता पर्दछ ।

मैले मात्र होइन, हजारौं संन्यासीहरूले उहाँको विराट् स्वरूप देखेका छन् । कृष्णले गीतामा अर्जुनलाई जसरी आफ्नो विराट् स्वरूप देखाउनुभयो, त्यसभन्दा पनि उच्च र अद्वितीय उहाँको ब्रह्माण्ड स्वरूप मैले देखेको छु र अनुभव गरेको छु कि वास्तवमा नै उहाँ चौंसठ्ठी कला पूर्ण अद्वितीय युगपुरुष हुनुहुन्छ, जो कुनै विशेष उद्देश्य लिएर पृथ्वी ग्रहमा आउनुभएको छ । केवल म मात्रै साक्षी होइन, मजस्ता हजारौं संन्यासी यस कुराका साक्षी छन् कि उहाँलाई अभूतपूर्व अद्वितीय सिद्धि प्राप्त छन्, भलै उहाँले आफूलाई लुकाउनुहोस्, भलै उहाँले सिद्धिहरूको प्रदर्शन नगर्नुहोस्, तर उहाँभित्र जति शक्ति एवं सिद्धि निहित छन्, ती स्वयंमा अन्यतम र अद्वितीय छन् ।

एक ठाउँमा उहाँले आफ्नो डायरीमा लेख्नुभएको छ–

“मैले त एउटा सामान्य मनुष्यले झैं आचरण गर्दै थिएँ, मानिसहरूले मलाई भगवान् भने, संन्यासी भने, महात्मा भने, योगीश्वर भने, तर म त आफूलाई एउटा सामान्य मानव नै ठान्दछु । म त्यही रूपमा गतिशील छु, मानिसहरूले भन्छन् भने म उनीहरूको मुख बन्द गर्न सक्तिन, किनकि जो जति गहिराइमा छ, उसले त्यही रूपमा मलाई बुझेर आफ्नो धारणा बनाउँछ । जसले मलाई माथिल्लो सतहबाट हेर्दछ, उसले मलाई सामान्य मनुष्यको रूपमा देख्छ, र जसले मेरो आभ्यन्तरिक जीवनलाई हेर्दछ, उसले मलाई ‘योगीश्वर’ भन्छ, ‘संन्यासी’ भन्छ । यो उनीहरूको धारणा हो, उनीहरूको दृष्टि हो, यो उनीहरूको दूरदर्शिता हो । जसले मेरो आलोचना गर्छन्, उनीहरूलाई पनि म केही भन्दिन र जसले मेरो सम्मान गर्छन्, मेरो प्रशंसा गर्छन्, उनीहरूलाई पनि म केही भन्दिन, किनकि म सुख-दुःख, मान-अपमान यी सबैबाट सर्वथा पर छु ।

मैले कुनै दावी गरेको छैन– म दश हजार वर्षको आयु प्राप्त योगी हुँ, न त म यस्तो दावी गर्छु– मैले गेरुवा वस्त्र ओढेर संन्यासी रूपमा विचरण गरें, हिमालय गएँ, सिद्धि प्राप्त गरें, अथवा म कुनै चमत्कारी व्यक्तित्व हुँ वा मैले कुनै अद्वितीय कार्य सम्पन्न गरेको छु । म त एउटा सामान्य मनुष्य हुँ र सामान्य मनुष्यले झैं जीवन व्यतीत गर्न चाहन्छु ।” डायरीको यो अंश उहाँको विनम्रता हो, यो उहाँको सरलता हो, तर जसले चिन्ने क्षमता राख्दछन्, उनीहरूबाट यो कुरा लुकेको छैन कि उहाँ नै त्यो अद्वितीय

युगपुरुष हुनुहुन्छ जो हजारौँ वर्षको अन्तरालमा पृथ्वी ग्रहमा अवतरित हुने गर्नुहुन्छ ।

परमहंस स्वामी निखिलेश्वरानन्दजीको व्यक्तित्व स्वयंमा अप्रतिम, अद्‌भुत र अनिर्वचनीय रहेको छ । त्यसमा हिमालयझैँ उचाइ छ भने सागरवत् गहिराइ पनि, साधनाप्रति उहाँ पूर्णत: समर्पित व्यक्तित्व हुनुहुन्छ भने जीवनप्रति उन्मुक्त सरल एवं सहृदय पनि, वेद, कर्मकाण्ड एवं शास्त्रप्रति उहाँको अगाध र विस्तृत ज्ञान छ भने मन्त्र एवं तन्त्रको बारेमा पूर्णत: जानकारी पनि । उहाँ पहिलो यस्तो व्यक्तित्व हुनुहुन्छ जसमा प्रत्येक प्रकारको साधना समाहित छ । उच्चकोटिको वैदिक र दैविक साधनामा उहाँ अग्रणी हुनुहुन्छ भने औघड श्मशान र सावर साधनामा पनि स्वयंमा अन्यतम हुनुहुन्छ ।

मैले उहाँलाई हजारौँ-लाखौँको भीडमा प्रवचन दिनुहुँदै गरेको सुनेको छु । उहाँको मानसिकता स्वयंमा सन्तुलित छ, कुनै पनि विषयमा नापतौल गरिएका शब्दहरूमा अजस्र, अबाध गतिमा बोलिरहन सक्नुहुन्छ । मूल धारबाट एक इन्च पनि दायाँबायाँ लाग्नुहुन्न । विविध विषयहरूको गहिराइ, तिनको सूक्ष्म विवेचन एवं साधना सिद्धिहरूलाई समाहित गर्दै मूल विषयलाई पूर्णताका साथ यसप्रकार प्रस्तुत गर्नुहुन्छ जसबाट सामान्य मनुष्यले सुनेर बुझ्न सक्दछ र मन्त्रमुग्ध बनिरहन्छ ।

म उहाँको संन्यास र गृहस्थ दुवै जीवनको साक्षी छु । हजारौँ संन्यासीहरूको भीडमा पनि उहाँलाई बोलिरहनुभएको सुनेको छु उच्चस्तरीय विद्वत्तापूर्ण शुद्ध संस्कृतमा अजस्र, अबाधरूपमा र गृहस्थ जीवनमा पनि सरल हिन्दीमा बोलिरहनुभएको सुनेको छु– विषयलाई अत्यन्त सरल ढंगबाट बुझाउँदै, बीचबीचमा हास्यको पुट दिँदै मनोविनोदसँगै आफ्नो कुरा उहाँ श्रोताको हृदयमा पूर्णताका साथ पुर्‍याएर राखिदिनुहुन्छ ।

मलाई उहाँको शिष्य बन्ने सौभाग्य मिल्यो र म यसमा स्वयंलाई गौरवान्वित अनुभव गर्दछु । उहाँसँग निकै समयसम्म रहने सुअवसर मलाई प्राप्त भयो । मैले उहाँको अथक परिश्रमलाई देखेको छु, बिहान सबेरै चार बजेदेखि राति

**कृष्णले गीतामा अर्जुनलाई जसरी आफ्नो विराट् स्वरुप देखाउनुभयो, त्यसभन्दा पनि उच्च र अद्वितीय उहाँको ब्रह्माण्ड स्वरुप मैले देखेको छु र अनुभव गरेको छु कि वास्तवमा नै उहाँ चौँसठ्ठी कला पूर्ण अद्वितीय युगपुरुष हुनुहुन्छ, जो कुनै विशेष उद्देश्य लिएर पृथ्वी ग्रहमा आउनुभएको छ ।**

बाह्र बजेसम्म निरन्तर कार्य गर्दा पनि उहाँको शरीरमा थकावटको चिन्ह खोज्दा पनि अनुभव हुन सक्दैन ।

उहाँ स्फूर्त र आनन्दपूर्ण स्थितिमा रहिरहनुहुन्छ । उहाँसँग कुराकानी गर्दा यस्तो लाग्छ मानौँ हामी प्रचण्ड ग्रीष्मको गर्मीबाट निक्लिएर वटवृक्षको शीतल छहारीमा आइपुगेका छौँ । उहाँको बोलीबाट मनलाई शान्ति प्राप्त हुन्छ जस्तो शीतल पवन बगिरहेको छ, र सम्पूर्ण शरीरलाई पुलकले भरिदिएको छ ।

## जीवन्त व्यक्तित्व

यस्तै अद्वितीय वेदमा वर्णित सिद्धाश्रमका सञ्चालक स्वामी सच्चिदानन्दजीका प्रमुख शिष्य योगीराज निखिलेश्वरानन्द हुनुहुन्छ जसमाथि सिद्धाश्रमको धेरैजसो अभिभारा छ । उहाँ संन्यासी जीवनमा हुनुहोस् वा गृहस्थ जीवनमा, रात्रिमा निरन्तर नित्य सूक्ष्म शरीरबाट सिद्धाश्रम जानुहुन्छ, त्यहाँको सञ्चालन व्यवस्थामा बराबर दृष्टि राख्नुहुन्छ । यदि कुनै साधक, योगी वा संन्यासीको कुनै साधनाविषयक समस्या छ भने त्यसको समाधान गर्नुहुन्छ र त्यस दिव्य आश्रमलाई क्षणक्षणमा नवीन राख्दै गतिशील पार्नुहुन्छ । वास्तवमै आज सिद्धाश्रमको जुन स्वरूप छ, त्यसको धेरैजसो श्रेय स्वामी निखिलेश्वरानन्दजीलाई जान्छ, जसको प्रयासबाट नै त्यो आश्रम स्वयंमा जीवन्त हुन समर्थ भयो ।

आयुर्वेदको क्षेत्रमा पनि उहाँले ती प्राचीन जडिबुटीका बोट एवं वृक्षहरू खोजेर निकाल्नुभएको छ जो स्वयंमा लुप्त भइसकेका थिए । वैदिक र पौराणिक कालमा ती वनस्पतिहरूको नाम विविध ग्रन्थहरूमा भिन्न भिन्न छन् तर आजको युगमा ती नाम प्रचलित छैनन् । अधिकांश जडिबुटीहरू कालको प्रवाहमा लुप्त भइसकेका थिए ।

आफ्नो फर्ममा त्यस्तै प्रकारको वातावरण बनाउँदै ती जडिबुटीहरूलाई फेरि लगाएर विकसित गर्ने प्रयास उहाँले गर्नुभयो । क्षेत्रफलको हिसाबमा निकै ठूलो यो फर्म आज विश्वको एउटा अनौठो स्थल हो जहाँ यस्ता दुर्लभ जडिबुटीहरूलाई सफलताका साथ उमार्ने सफलता प्राप्त भएको छ

जसद्वारा असाध्य रोग निराकरण गर्न सकिन्छ । यिनको गुणदोषको विवेचन, सेवन विधि, प्रयोग र यीसम्बन्धी जति सूक्ष्म जानकारी उहाँलाई छ, त्यो स्वयंमा अन्यतम छ ।

पारदका सोह्र संस्कार मात्र नभई चौवन्न संस्कारद्वारा यस क्षेत्रमा उहाँको ज्ञान स्वयंमा अन्यतम भएको सिद्ध गरिदिनुभएको छ । एउटा धातुबाट अर्को धातुमा रूपान्तरित गर्ने विधिहरू उहाँले खोजेर निकाल्नुभयो र सफलतापूर्वक अपार जनसमूहको अगाडि यस्तो क्रिया सम्पन्न गरेर उहाँले देखाइदिनुभयो कि रसायन क्षेत्रमा हामी आज पनि विश्वमा अद्वितीय छौं । थुप्रै शिष्यहरूले उहाँको सान्निध्यमा रसायन ज्ञान प्राप्त गरेका छन् र तामाबाट सुन बनाएर यस विद्यालाई महत्ता र गौरव प्रदान गरेका छन् ।

## सिद्धाश्रमका प्राण

सिद्धाश्रम देवताहरूको लागि पनि दुर्लभ र अन्यतम स्थान हो जसलाई प्राप्त गर्नको लागि उच्चकोटिका योगी पनि तड्पिन्छन् । प्रत्येक संन्यासीले आफ्नो मनमा यही आकांक्षा पालेको हुन्छ कि जीवनमा एकचोटि सिद्धाश्रम प्रवेशको अवसर प्राप्त हुन सकोस् । यो शाश्वत् पवित्र र दिव्य स्थल मानसरोवर र कैलाशभन्दा पनि पर स्थित छ जसलाई स्थूल दृष्टिले हेर्न सम्भव छैन । जसको ज्ञानचक्षु जागृत छ, जसको हृदयमा सहस्रारको अमृत धारण छ, उसले मात्र यस्तो सिद्ध स्थललाई देख्न सक्दछ ।

ऋग्वेदभन्दा पनि प्राचीन यो स्थल स्वयंमा महिमामण्डित छ । विश्वमा थुप्रैपटक सृष्टिको निर्माण भयो र थुप्रैपटक प्रलयको स्थिति पनि आयो, तर सिद्धाश्रम स्वयंमा अविचल स्थिर रह्यो । यसमा न कालको कुनै प्रभाव पर्दछ, न त वातावरण अथवा जलवायुको नै । यी सबैभन्दा पर आगम्य र अद्वितीय छ यो स्थल । यस्तो स्थानमा जो योगी पुग्दछ, ऊ स्वयंमा अन्यतम र अद्वितीय बन्न पुग्दछ ।

महाभारतकालीन भीष्म, कृपाचार्य, युधिष्ठिर, भगवान् कृष्ण, शंकराचार्य, गोरखनाथ आदि योगी आज पनि यहाँ सशरीर विचरण गर्दै गरेको देख्न सकिन्छ । अन्यतम योगीहरूमा स्वामी सच्चिदानन्दजी, महर्षि भृगु आदि हुनुहुन्छ जसका नाम स्मरण नै पूरै जीवनलाई पवित्र र दिव्य बनाउनको लागि पर्याप्त छ ।

माइलौं लम्बाइमा फैलिएको यो सिद्धि क्षेत्र स्वयंमा अद्वितीय छ जहाँ न रात हुन्छ न दिन । गोधूलीको बेला जस्तो चित्ताकर्षक दृष्य र प्रकाश व्याप्त हुन्छ, त्यस्तै प्रकाश यहाँ बाह्रै महिना रहन्छ । यहाँका धरतीमा जाडो गर्मी आदिको कुनै प्रभाव प्रतीत हुँदैन । यस्तो सिद्धाश्रममा रहने योगीहरू कालजयी हुन्छन्, उनीहरूमा जरा, मृत्यु आदिको प्रभाव व्याप्त हुन सक्तैन ।

सिद्धाश्रम स्वयंमा जीवन्त स्थल हो जहाँ मस्ती, आनन्द, उल्लास, उमंग र हलचल छ, जहाँ गति र चेतना छ । आज सिद्धाश्रमलाई देख्दा नन्दन काननभन्दा पनि बढी सुखकर र आनन्ददायक प्रतीत हुन्छ– यो उहाँकै प्रबल पुरुषार्थको फल हो ।

एउटा मृतप्राय: सिद्धाश्रम उहाँको आगमनबाटै आनन्दमय हुन पुग्यो र सही अर्थमा सिद्धाश्रम बन्न पुग्यो । सिद्धाश्रममा उच्चकोटिका योगी वशिष्ठ, विश्वामित्र, गर्ग, कणाद, आद्य शंकराचार्य, कृष्ण आदि सम्पूर्ण विद्यमान हुनुहुन्छ । उच्चकोटिका योगी पृथ्वीमा आफ्नो कार्य पूरा गरिसकेपछि यो बाहिरी नश्वर शरीरलाई छोडेर सदासदाको लागि सिद्धाश्रम पुग्दछन् । सिद्धाश्रमका श्रेष्ठ योगीजन कहिले निखिलेश्वरानन्दजी आउनुहोला र उहाँको चरणधूलो पाइएला भनेर बाटो हेरी बसिरहन्छन् । ऋषिमुनिहरू आफ्नो साधनालाई बीचमै रोकेर त्यस स्थानमा उभिन पुग्दछन् जहाँबाट निखिलेश्वरानन्दजी हिंड्दै हुनुहुन्छ । प्रकृति पनि स्वयंमा नृत्यमय हुन पुग्दछिन् किनकि सिद्धाश्रम जुन प्राणश्चेतनाबाट गतिशील छ, त्यही प्राणश्चेतनाको आधार निखिलेश्वरानन्दजी हुनुहुन्छ ।

उच्चकोटिका अप्सराहरू निरन्तर आफ्नो नृत्य, गायन र संगीतले सम्पूर्ण सिद्धाश्रमलाई गुञ्जरित बनाइरहन्छन् । एउटा अद्भुत वातावरण छ यहाँको । यस्तो लाग्दछ स्वर्ग पनि यसको अगाडि तुच्छ छ र वास्तवमै स्वर्ग र इन्द्रलोक अत्यन्त तुच्छ छन् यसप्रकारको सिद्धाश्रमको अगाडि जहाँ सिद्धयोगा ताल गतिशील छ, जसमा

**सिद्धाश्रम स्वयंमा जीवन्त स्थल हो जहाँ मस्ती, आनन्द, उल्लास, उमंग र हलचल छ, जहाँ गति र चेतना छ । आज सिद्धाश्रमलाई देख्दा नन्दन काननभन्दा पनि बढी सुखकर र आनन्द दायक प्रतीत हुन्छ– यो उहाँकै प्रबल पुरुषार्थको फल हो ।**

स्नान मात्र गर्दा पनि समस्त रोग हटेर जान्छन्, जसको किनारमा बस्दा मात्र पनि स्वयंमा सम्पूर्ण पवित्रताको बोध हुन पुग्दछ, जसमा अवगाहन गर्दा मात्र पनि पूर्ण शीतलता र शान्तिको महसुस हुन लाग्दछ । यसमा स्नान गर्नाले नै यो देह, जुन देहमा हामी गतिशील छौं, लाई तुरुन्त आभास हुन पुग्दछ कि पाँच हजार वर्षअघि हामी के थियौं ? कि त यसप्रकारका उच्चकोटिका योगीहरूको निकट रहनाले उनीहरूद्वारा ज्ञात हुन सक्दछ अथवा सिद्धयोगा तालमा स्नान गर्नाले स्मरण हुन सक्दछ ।

म उहाँको यस जीवनको साक्षी रहेको छु, र अत्रि, कणाद, गौतम, वशिष्ठसदृश उच्चकोटिका योगी पनि निखिलेश्वरानन्दजीको व्यक्तित्वलाई देखेर आह्लादित एवं रोमाञ्चित हुन पुग्दछन् । उनीहरूको जीवनमा यो सपना रहेको हुन्छ कि निखिलेश्वरानन्दजीसँग रहौं, उहाँसँग कुराकानी गरौं, र  उहाँको कुराकानीको प्रत्येक अंशमा कुनै न कुनै साधना निहित रहेको हुन्छ । वास्तममा हेर्ने हो भने उहाँ योगीहरूमा परम श्रेष्ठ, अद्भुत, तेजस्वी एवं अद्वितीयता समेट्नुभएका महामानव हुनुहुन्छ ।

जो योगीजन उहाँसँग सिद्धाश्रम पुगेका छन्, उनीहरूले उहाँको व्यक्तित्वलाई चिनेका छन् । उनीहरूले देखेका छन् हजारौं वर्षका आयु प्राप्त योगी पनि जब निखिलेश्वरानन्दजी सिद्धाश्रममा प्रवेश गर्नुहुन्छ तब उनीहरू आफ्नो तपस्यालाई बीचमै भंग गरेर उभिन पुग्दछन्, र उहाँको चरणस्पर्श गर्नको लागि ठेलमठेल हुन पुग्दछ, चाहे साधक साधिका हुन्, चाहे योगी हुन्, चाहे अप्सरा हुन्, सबैमा एउटै ललक, एउटै पुलक, एउटै इच्छा, आकांक्षा रहेको हुन्छ– स्वामी निखिलेश्वरानन्दजीका चरणहरूको स्पर्श गर्न पाइयोस् जो गंगाझैं पवित्र छन्, जो स्वयंमा वन्दनीय छन्, जो स्वयंमा पूज्य छन्, जसको स्पर्श स्वयंमा अहोभाग्य हो, र उहाँ जुन बाटो हिँड्नुहुन्छ, जहाँ जहाँ उहाँका चरणचिह्न पर्दछन्, त्यहाँको धूलो टिपेर उच्चकोटिका संन्यासी, योगी आफ्नो निधारमा लगाउँछन्, साधिकाहरू त्यस माटोलाई चन्दनझैं आफ्नो शरीरभरि लगाउँछन् र स्वयंलाई धन्य धन्य अनुभव गर्दछन् ।

उहाँले कसैलाई पनि आफूसँगै सिद्धाश्रम लैजान सक्नुहुन्छ, चाहे त्यो कुनै पनि जाति, वर्ग, भेद, वर्ण, लिंगको स्त्री वा पुरुष होस् । यसको लागि सिद्धाश्रमबाट उहाँलाई एउटा तरंग प्राप्त हुन्छ, एउटा आज्ञा प्राप्त हुन्छ, त्यसपछि स्वामी निखिलेश्वरानन्दजीले त्यो व्यक्तित्व, जसले साधना गरेको होस् अथवा नहोस्, लाई आफूसँगै लैजानुहुन्छ । तर उहाँसँग त्यही जान सक्दछ जो पूर्ण भावले समर्पित शिष्य हुन्छ ।

## प्रातः स्मरणीय स्वामी सच्चिदानन्दका आत्मस्वरूप

सिद्धाश्रमका सञ्चालक‘परमहंस स्वामी सच्चिदानन्दजी’ हुनुहुन्छ। उहाँ त स्वयंमा अन्यतम, अद्वितीय विभूति हुनुहुन्छ, समस्त देवताहरूको पुञ्जबाट एकत्रित भएर उहाँको निर्माण भएको हो । सबै देवताहरूले आआफ्नो अंश दिएर यस्तो अद्भुत व्यक्तित्वको विकास गरेका छन् जसलाई सच्चिदानन्दजी भनिन्छ ।

परमहंस, प्रातः स्मरणीय ‘पूज्यपाद स्वामी सच्चिदानन्दजी’को आशीर्वाद पाएर सिद्धाश्रम गतिशील छ जहाँको माटो कुंकुमझैं छ जसलाई निधारमा लगाउने इच्छा गरिन्छ, जहाँ महाभारतकाल र त्रेतायुगका योगी एवं संन्यासी निरन्तर विचरण गर्दछन्, गतिशील छन् ।

सच्चिदानन्दजीले हजारौं वर्षको आफ्नो जीवनमा केवल तीन शिष्य नै बनाउनुभएको छ । उहाँको क्रिया अत्यन्त कठोर छ, र जो ती क्रियाहरूमा खरो उत्रिन्छ, उसैलाई उहाँ आफ्नो शिष्यत्व प्रदान गर्नुहुन्छ । पूज्य गुरुदेव यस्तै अद्भुत व्यक्तित्व हुनुहुन्छ जसले पूर्णताका साथ ‘स्वामी सच्चिदानन्दजी’बाट दीक्षा प्राप्त गर्नुभएको छ, र सिद्धाश्रम मात्र होइन, पूरै ब्रह्माण्ड यो कुराको लागि गौरवान्वित छ कि उहाँ ‘स्वामी सच्चिदानन्दजी’का शिष्य हुनुहुन्छ ।

## सम्पूर्ण ब्रह्माण्ड जसको विचरण स्थल हो

थुप्रै संन्यासीहरूले उहाँलाई इन्द्रलोक, पाताललोक, सूर्यलोक, चन्द्रमा तथा अन्य लोकहरूमा पनि विचरण गर्नुभएको देखेका छन् । शुक्र ग्रहमा थुप्रै योगीहरू उहाँसँग गएका थिए, किनकि उहाँ सूक्ष्म शरीरलाई यति माथि उठाउनुहुन्छ जसबाट उहाँ ब्रह्माण्डको एउटा भाग बन्न पुग्नुहुन्छ । त्यही भागबाट उहाँ समस्त ग्रहहरूमा विचरण गरिरहनुहुन्छ । उहाँको बाहिरी शरीर यहीं रहन्छ एउटा सामान्य शरीरझैं, तर आभ्यन्तरिक शरीरले समस्त ग्रहहरूको प्रतिनिधित्व गर्दछ । शुक्र ग्रहमा उहाँको दर्शन पाउनको लागि मानिसहरू तँछाडमछाड गर्दछन्, दौडिन्छन् र उहाँको एउटा झलक पाएर उनीहरू आफूलाई परम सौभाग्यशाली सम्झन्छन् ।

मैले उहाँसँगै ती लोकहरूको पनि यात्रा गरेको छु र स्वयं देखेको छु– उहाँ जति मृत्युलोकमा प्रिय हुनुहुन्छ, जति सिद्धाश्रममा प्रिय हुनुहुन्छ, त्यसभन्दा पनि बढी शुक्र ग्रह र अन्य लोकहरूमा प्रिय हुनुहुन्छ । सबै लोकहरूमा उहाँको निरन्तर प्रतीक्षा रहेको हुन्छ । मैले उहाँलाई जहाँ देखे पनि लाग्दछ– सम्पूर्ण ब्रह्माण्डमा फैलिएको व्यक्तित्व हो यो जसलाई कुनै एउटा ग्रह वा स्थानले मात्र महत्व दिँदैन, अपितु पूरै ब्रह्माण्डको प्रत्येक ग्रहले उहाँलाई महत्व दिन्छ । उहाँ अत्यन्त सूक्ष्म शरीर धारण गर्न सक्नुहुन्छ र विराट् स्वरूप पनि धारण गर्न सक्नुहुन्छ । उहाँ एक क्षणमै एउटा स्थानबाट अर्को स्थानमा पुग्ने सामर्थ्य राख्नुहुन्छ । उहाँ हिमालयका उच्च शिखरहरूमा ठीक त्यसैप्रकार विचरण गर्नुहुन्छ जस्तो समथर मैदानमा हिँडिरहनुभएको होस् । गहन एवं गह्वर गुफाहरूमा मैले उहाँलाई निरन्तर साधना गरिरहनुभएको अनुभव गरेको छु ।

## सावर साधनाका अन्यतम योगी

सावर साधना जीवनका सरल, सहज एवं महत्वपूर्ण साधना हुन् । यी साधनाहरूमा जटिल विधिविधान छैनन्, लामा लामा विस्तार छैनन्, सूक्ष्म-श्लोक संस्कृतमा होइन, अपितु सरल भाषामा छन् । संसारका आठ क्रिया यस्ता छन् जो हजारौं वर्षअघि विकसित थिए तर आज यी विद्याहरू प्रायः लुप्त छन् र शायदै तिनको बारेमा योगीहरूलाई जानकारी होला । सिद्धाश्रममा यिनको बारेमा निरन्तर शोध भइरहेको छ र ती चिन्तन तथा साधना विधिहरूलाई खोजेर निकालिएको छ ।

मैले देखेको छु उहाँको व्यक्तित्वमा असीम प्राण चेतना छ, सत्य र वास्तविकतालाई झूटो बनाएर यसलाई दबाउन सकिँदैन । प्रहार गरेर त्यसको गतिलाई अवरुद्ध गर्न सकिँदैन, बहलाएर त्यसलाई चुप लगाउन सकिँदैन । उहाँको मनमा भारतवर्षप्रति असीम त्याग र अगाध श्रद्धा छ । उहाँ भारतवर्षलाई पुनः त्यही स्थितिमा लैजान चाहनुहुन्छ जुन यसको वास्तविक स्वरूप हो । उहाँ ऋषिमुनिहरूका मन्त्र साधना एवं सिद्धिहरूलाई सही ढंगबाट पुनः स्थापित गर्न चाहनुहुन्छ । ज्योतिष र आयुर्वेदको लुप्त स्थानलाई पुनः दिलाउन चाहनुहुन्छ ।

उहाँलाई देख्दा नै यस्तो आभास हुन्छ जस्तो प्राचीन समयका आर्य आफ्नो पूर्ण शारीरिक क्षमता एवं ज्ञान गरिमालाई लिएर साकार छन् । अग्लो र पुष्ट शरीर, आकर्षक एवं चुम्बकीय नेत्र, वाणीमा गम्भीरता र गरिमा, दृढतायुक्त सिंहवत् हिँडाइ र हृदयमा पौरुष– यी सबैलाई मिलाएर एउटा यस्तो व्यक्तित्वको निर्माण गर्नुहुन्छ जसलाई हामीले आफ्नो जीवनमा आर्य भनेका छौं, जो सही अर्थमा हाम्रा पूर्वज हुन् ।

उहाँ अत्यन्तै सरल, सौम्य र सहज हुनुहुन्छ, कुनै प्रकारको आडम्बर वा प्रदर्शन उहाँको जीवनमा छैन । आन्तरिक एवं बाह्य जीवनमा कुनै पनि प्रकारको लुकामारी छैन, जे जति जीवनमा छ त्यही यथार्थ हो, यही उहाँको

विशेषता हो ।

कहिलेकाहीँ त उहाँको यो सरल व्यक्तित्व देखेर उकुसमुकुस पनि हुन्छ । यति उच्चकोटिको योगी यति सरल सहज र सामान्य जीवन व्यतीत गर्दछ जसलाई देखेर विश्वास नै हुँदैन कि उहाँ साधनाको क्षेत्रमा अप्रतिम हुनुहुन्छ । सिद्धिहरूको हजारौँ भागको कुनै अंश पनि यदि कसैसँग हुँदो हो त उसले अहंको मदमा चूर हुँदै भुइँमा खुट्टा राख्दैनथ्यो ।

## ज्योतिर्विज्ञानका पुरोधा

ज्योतिषको क्षेत्रमा स्वामी निखिलेश्वरानन्दजीले जुन काम गर्नुभएको छ, त्यो पूर्ण साधनात्मक संस्थाले पनि गर्न सक्दैन । उहाँ एक्लैले जे जति कार्य गर्नुभएको छ, त्यसलाई देखेर आश्चर्य हुन्छ ।

ज्योतिषको दृष्टिबाट जन्म कुण्डलीमा दोस्रो भाव द्रव्यसँग सम्बन्धित छ र स्वामीजीले ज्योतिषका नवीन सूत्रहरूको रचना गर्नुभयो । ज्योतिषका ती सिद्धान्तहरू प्रतिपादित गर्नुभयो जुन आजको युगअनुरूप छन्, जुन वर्तमान सामाजिक व्यवस्थामा सही छन् र तिनलाई ससाना ग्रन्थको माध्यमबाट उहाँले सम्पूर्ण देशभर एउटा चेतना दिनुभयो । ज्योतिषप्रति उनीहरूको मनमा चाख उत्पन्न गर्नुभयो, उनीहरूलाई विश्वास दिलाउनुभयो, ज्योतिषको क्षेत्रमा नवीन कार्य भए, छरिएर रहेका ज्योतिषीहरूलाई एउटा मञ्च दिनुभयो र उनीहरूलाई सम्झाउनुभयो– यो ज्ञान तब मात्र सफल हुन सक्छ जब यसमा पूर्ण समर्पित भावले कार्य गरिन्छ ।

## आयुर्वेदका आधारभूत व्यक्तित्व

आयुर्वेदको क्षेत्रमा योगीराज पूज्य गुरुदेवको योगदान बेजोड छ । यदि वास्तविक दृष्टिले हेर्ने हो भने ज्योतिष र आयुर्वेद यी दुई विद्याहरू मात्रै भारतवर्षसँग थिए जसमा ऊ सम्पूर्ण विश्वको अग्रणी थियो । आज पनि विज्ञानको क्षेत्रमा विश्व भलै धेरै अघि बढिसकेको होस्, उसले नयाँभन्दा नयाँ प्रविधि प्राप्त गरेको होस्, तर यी दुवै क्षेत्रमा आज पनि पूरै विश्व भारतवर्षतर्फ नै हेर्दछ ।

सबैभन्दा दुःखको कुरा त के थियो भने

**अग्लो र पुष्ट शरीर, आकर्षक एवं चुम्बकीय नेत्र, वाणीमा गम्भीरता र गरिमा, दृढतायुक्त सिंहवत् हिँडाइ र हृदयमा पौरुष– यी सबैलाई मिलाएर एउटा यस्तो व्यक्तित्वको निर्माण गर्नुहुन्छ जसलाई हामीले आफ्नो जीवनमा आर्य भनेका छौँ, जो सही अर्थमा हाम्रा पूर्वज हुन् ।**

आयुर्वेदका प्रामाणिक ग्रन्थ त लगभग लुप्त भइसकेका थिए । जति पनि ग्रन्थ बचेका थिए, तिनमा जुन जडिबुटीहरूको विवरण वर्णन पाइन्थ्यो त्यो आजको युगमा ज्ञात थिएन । त्यसबेला वनौषधिहरूलाई संस्कृत नामले पुकारिन्थ्यो तर आज त ती शब्दबाट तिनको परिचय हुन सक्तैन । त्यसैले ती वनौषधिहरूको न पहिचान भइरहेको थियो, न त तिनीहरूको सही अर्थमा उपयोग नै भइरहेको थियो । यो स्वयंमा अन्धकारपूर्ण स्थिति थियो । यस्तो स्थितिमा कुनै पनि वनस्पतिलाई कुनै पनि नामको संज्ञा दिइन्थ्यो । उदाहरणको लागि तेलियाकन्द भारतवर्षको एउटा अद्भुत एवं आश्चर्यजनक गुणयुक्त दिव्य औषधि हो । तर अघिल्लो वैद्य सम्मेलनमा लगभग १८ व्यक्तिहरूले १८ प्रकारका विभिन्न बोट ल्याएर त्यस सम्मेलनमा राखे र सबैले आफूले जुन खोज गरेको छ त्यही नै प्राचीन आयुर्वेदिक शास्त्रमा वर्णित प्रामाणिक र सही तेलियाकन्द हो भन्ने सिद्ध गर्ने प्रयास गरे । तर तीमध्ये कुनै पनि बोट तेलियाकन्दको थिएन, र यही वास्तविकता थियो ।

यस्तो स्थितिमा निखिलेश्वरानन्दजीले ती प्राचीन जडिबुटीहरूलाई खोजेर निकाल्नुभयो जसको विवरण वर्णन प्राचीन आयुर्वेदिक ग्रन्थहरूमा पाइन्छ । तिनीहरूको चित्र, गुणधर्म, पहिचान आदिको विस्तृत व्याख्या गरेर बुझाउनुभयो र आयुर्वेद जगत्लाई ती जडिबुटीहरूसँग परिचित गराउनुभयो ।

स्वामी निखिलेश्वरानन्दजीको अधिकांश समय हिमांचलमा व्यतीत भयो र उहाँ हिमालयको कुनाकुनासँग परिचित हुनुहुन्छ । प्रत्येक स्थान, त्यसको महत्ता, त्यसको भौगोलिक एवं पौराणिक स्थितिको ज्ञान त स्वामीजीलाई छँदैछ, त्यसको साथसाथै त्यहाँ पाइने जडिबुटी एवं बोटवृक्षहरूको पनि विस्तृत ज्ञान पनि उहाँलाई छ ।

उहाँले एकजना शिष्यको सहयोगमा नैनीताल र रानीखेतको बीचमा एउटा अत्यन्त ठूलो फर्म तयार पार्नुभएको छ जुन लगभग एक माइल चौडा र अढाई माइल लामो छ । यस पूरै फर्ममा ती दुर्लभ जडिबुटीहरू उमार्ने प्रयास गर्नुभएको छ जुन बिस्तारै बिस्तारै लुप्त हुँदै गइरहेका छन् ।

हिमालयको सुदूर अञ्चलमा यस्ता बिरुवा लगाएर स्थापित गर्ने प्रयत्न गर्नुभएको छ । उहाँले एउटा सानो पुस्तिका पनि लेख्नुभएको छ जसमा उहाँले ती ६४ दुर्लभ जडिबुटीको परिचय दिनुभएको छ जो बिस्तारै बिस्तारै लोप भइरहेका छन् । यदि समयमै तिनको सम्वर्द्धन हुन सकेन भने निश्चय नै ती जडिबुटीहरू समाप्त हुनेछन् ।

यति व्यस्त व्यक्तित्व हुँदाहुँदै पनि बोटबिरुवाप्रति उहाँको ममत्व अप्रतिम छ । उहाँले हिमालयको निकै उचाइबाट ठूलो कठिनाइसाथ केही बिरुवा ल्याएर त्यस फर्ममा सार्नुभएको छ जसको पालनपोषण उहाँले एउटी आमाले शिशुको गरेझैं गर्नुभएको छ ।

उहाँ भन्नुहुन्छ प्रकृति हाम्रो शत्रु वा प्रतिस्पर्धी होइन, अपितु सहायक हो । उससँग द्वन्द्व गरेर सफलता पाउन सकिँदैन, अपितु उससँग समन्वय गरेर नै सिद्धि प्राप्त हुन सक्दछ । यही स्थिति र सिद्धान्तलाई ध्यानमा राखेर पूज्य गुरुदेवले जुन साधनाहरू स्पष्ट पार्नुभयो, तिनको माध्यमले योगीहरूले सजिलैसँग प्रकृतिमाथि विजय प्राप्त गरे ।

## सिद्धिहरूका पुञ्जभूत स्वरूप

हाम्रा पूर्वज तथा ऋषिहरूसँग विशिष्ट सिद्धिहरू थिए, तर कालको प्रवाहमा तिनमध्ये धेरै लुप्त भएर गए । तिनमा पनि बाह्र सिद्धिहरू त सर्वथा लोप भइसकेका थिए, जसको केवल नामोल्लख कहीं कतै पढ्न पाइन्थ्यो तर तिनको बारेमा न त कसैलाई प्रामाणिक ज्ञान थियो न कसैलाई त्यस्ता सिद्धि न प्राप्त थिए । ती सिद्धिहरू यसप्रकार छन्– १. **परकाया सिद्धि**; २. **आकाश गमन सिद्धि**; ३. **जल गमन प्रक्रिया सिद्धि**; ४. **हादी विद्या**, जसको माध्यमबाट साधकले कुन आहार ग्रहण नगरी वर्षौं जीवित रहन सक्दछ । ५. **काली विद्या**, जसको माध्यमबाट साधक वा योगीले जस्तोसुक परिस्थितिमा पनि आफ्नो अस्तित्व बनाइरहन सक्दछ । उसमाथि जाडो, गर्मी, वर्षा, आगो, हिमपात आदिको कुनै प्रभाव पर्दैन । ६. **काली सिद्धि**, जसको माध्यमबाट हजारौं वर्षअघिका क्षण अथवा घटनालाई चिन्न, हेर्न र बुझ्न सकिन्छ । साथै आगामी हजारौं वर्षको कालखण्डलाई जान्न सकिन्छ कि भविष्यमा कहाँ कस्तो घटना घटित हुनेछ त्यसको बारेमा प्रामाणिक ज्ञान एक क्षणमा नै हुन जान्छ । यति मात्र होइन, अपितु यस साधनाको माध्यमले भविष्यमा हुने घटनालाई ठीक त्यसैप्रकार हेर्न सकिन्छ जसरी टेलिभिजनमा कुनै फिल्म हेर्न लागिएको होस् । ७. **सञ्जीवनी विद्या**, जुन शुक्राचार्य अथवा थोरै अन्य ऋषिहरूलाई ज्ञात थियो जसको माध्यमबाट मृत व्यक्तिलाई पनि जीवनदान दिन सकिन्छ । ८. **इच्छा मृत्यु साधना**, जसको माध्यमबाट व्यक्तिको शरीरमा पूर्ण परिवर्तन ल्याउन सकिन्छ र यस्ता परिवर्तन भएपछि वृद्ध व्यक्तिको पनि कायाकल्प भएर ऊ स्वस्थ सुन्दर युवक बन्न सक्दछ, रोगरहित यस्तो व्यक्तित्वले धेरै वर्षसम्म स्वस्थ रहेर आफ्ना कार्यहरूमा सफलता पाउन सक्दछ । १०. **लोक गमन सिद्धि**, जसको माध्यमबाट पृथ्वीलोकमा मात्र नभई अन्य लोकहरूमा पनि त्यसैगरी विचरण गर्न सकिन्छ जसरी हामी कारद्वारा एक ठाउँबाट अर्को ठाउँमा वा एउटा शहरबाट अर्को शहरमा पुग्दछौं । यो साधनाको माध्यमबाट भूलोक, भुव:लोक, स्व:लोक, मह:लोक, जनलोक, तपलोक, सत्यंलोक, चन्द्रलोक, सूर्यलोक तथा वायुलोकमा पनि पुगेर त्यहाँका वासिन्दाहरूलाई भेट्न सकिन्छ, त्यहाँका श्रेष्ठ विद्याहरू प्राप्त गर्न सकिन्छ र इच्छा लाग्नासाथ एउटा लोकबाट अर्को लोकमा पुग्न सकिन्छ । ११. **शून्य साधना**, जसको माध्यमद्वारा प्रकृतिबाट कुनै पनि चीज प्राप्त गर्न सकिन्छ । खाद्य पदार्थ, भौतिक वस्तु तथा सम्पन्नता आर्जित गर्न सकिन्छ । १२. **सूर्य विज्ञान**, जसको माध्यमबाट एउटा पदार्थलाई अर्को पदार्थमा रूपान्तरित गर्न सकिन्छ ।

आफ्नो तपोबलद्वारा पूज्य निखिलेश्वरानन्दजीले यी सिद्धिहरूलाई ती विशिष्ट ऋषि एवं योगीहरूबाट प्राप्त गर्नुभयो जो यिनका सिद्धहस्त आचार्य थिए । मलाई राम्रैसँग याद छ उहाँले सीधै विश्वामित्रबाट **परकाया प्रवेश साधना** प्राप्त गर्नुभएको थियो । साधनाको बलले उहाँले महर्षि विश्वामित्रलाई आफ्नो अगाडि साकार पार्नुभयो र उहाँबाट नै परकाया प्रवेशका ती विशिष्ट साधना एवं सिद्धिहरू सिक्नुभयो

**सही अर्थमा उहाँ शिव स्वरुप हुनुहुन्छ जसको प्रत्येक शब्दले आफ्नो अर्थवत्ता बोकेको छ, जसले तन्त्रको माध्यमबाट ती गुप्त रहस्यहरुलाई उजागर गर्नुभएको छ जो अहिलसम्म गोपनीय रहेका थिए ।**

जो स्वयंमा अन्यतम छन् । शंकराचार्यको समयसम्म त परकाया प्रवेशको एउटै मात्र विधि प्रचलित थियो जसको उपयोग भगवत्पाद शंकराचार्यले गर्नुभएको थियो तर योगीराज निखिलेश्वरानन्दजीले विश्वामित्रबाट ती छ विधिहरू प्राप्त गर्नुभयो जुन परकाया प्रवेशसँग सम्बन्धित थिए । परकाया प्रवेश केवल एउटै विधिले मात्र सम्भव छैन, अपितु थुप्रै विधिबाट परकाया प्रवेश हुन सक्दछ । यो कुरा निखिलेश्वरानन्दजीले सयौँ योगीहरूको अगाडि सिद्ध गरेर देखाइदिनुभयो ।

परमहंस स्वामी निखिलेश्वरानन्दजी यी बाह्रवटै सिद्धिहरूका सिद्धहस्त आचार्य हुनुहुन्छ । कहिलेकाहीँ त यस्तो लाग्छ मानौँ ती अलौकिक एवं दुर्लभ सिद्धिहरू होइनन् अपितु उहाँका हातका खेलौनाझैँ हुन् र कुनै पनि बेला इच्छा लाग्नासाथ तिनको प्रयोग एवं उपयोग गर्नुहुन्छ । यी समस्त विधिहरूलाई उहाँले ती महर्षिहरूबाट प्राप्त गर्नुभएको छ जो ती क्षेत्रका सिद्धहस्त आचार्य एवं योगी हुनुहुन्छ ।

उहाँले हिमालयस्थित योगी, संन्यासी एवं सिद्धहरूको सम्मेलनमा स्पष्ट शब्दमा भन्नुभएको थियो– तिमीहरूले यी कन्दराहरूमा बस्ने होइन, जंगलमा भट्किने होइन, बरु यसको सट्टामा समाजमा गएर रहनुपर्दछ, उनीहरूका पीर दुःख साट्ने, बुझ्ने र हटाउने कार्य गर्नुपर्दछ ।

मैले धेरैपटक अनुभव गरेको छु, उहाँका ढोकाबाट कोही पनि रित्तो हात फर्किएको छैन । जो शिष्य, साधक, योगी वा संन्यासीले जे चाहेको छ, त्यो उहाँबाट प्राप्त गरेको छ । गोपनीयभन्दा गोपनीय साधना प्रदान गर्नमा पनि उहाँ हिचकिचाउनुभएन । साधनाको मूल रहस्य स्पष्ट पार्नुहुन्थ्यो, आफ्नो अनुभव सुनाउनुहुन्थ्यो, धैर्य गर्न सिकाउनुहुन्थ्यो, ढाडस दिनुहुन्थ्यो र हामी सबै चीज गर्न सक्छौँ भन्ने उनीहरूमा जोश तथा आत्मविश्वास भरिदिनुहुन्थ्यो, यही गुण उहाँको महानताको परिचायक हो ।

## सूर्य सिद्धान्तका आचार्य

सूर्यका किरणहरूमा विभिन्न रंगका रश्मिहरू हुन्छन् र तिनको समन्वित रूप नै श्वेत (सेतो) रंग हो भनी पतञ्जलिले आफ्नो सूत्रमा बताउनुभएको छ । यिनै रश्मिहरूको विशेष संयोजनबाट योगीले कुनै पनि पदार्थलाई सहजै शून्यबाट निर्माण गर्न सक्दछ, अथवा एउटा पदार्थलाई अर्को पदार्थमा परिवर्तित गर्न सक्दछ । गुरुदेवले आफ्नो संन्यास जीवनमा चौबीस वर्तुलको एउटा स्फटिक लेन्सबाट प्रकाश किरणहरूलाई परावर्तित गरेर एउटा ढुंगालाई हीरकखण्डमा परिवर्तित गर्नुभएको म स्वयंले देखेको छु । र पुनः त्यस स्फटिक वर्तुल एवं हीरकखण्डलाई शून्यमा फर्काइदिनुभएको देखेको छु, किनकि उहाँको कथन छ– योगीले आफूसँग केही पनि राख्दैन । जब आवश्यकता हुन्छ, तब प्रकृतिबाट प्राप्त गर्दछ र काम पूरा भएपछि त्यो वस्तु प्रकृतिलाई फर्काइदिन्छ ।

उहाँका ढोकाबाट कोही पनि रित्तो हात फर्किएको छैन । जो शिष्य, साधक, योगी वा संन्यासीले जे चाहेको छ, उहाँबाट प्राप्त गरेको छ ।

## शिष्य ज्ञान

अनेक अवसरहरूमा आफ्ना पूर्वजन्मका शिष्य-शिष्याहरूलाई खोजेर पुनः साधनात्मक पथमा सुदृढ गराउनुभएको म स्वयंले देखेको छु । एकपटक नैनीतालको कुनै पहाडी गाउँनजिक गुरुदेवसहित हामी केही शिष्य हिँड्दै थियौँ । गुरुदेव हामी सबैलाई लिएर गाउँमा कुनै ब्राह्मणको एउटा सानो घरमा पुग्नुभयो अनि ती ब्राह्मणलाई भन्नुभयो– 'के आठ वर्षअघि तिम्रो घरमा कुनै कन्याले जन्म लिएकी थिइन् ?' ब्राह्मणले आश्चर्यचकित भएर आफ्नी पुत्री सत्संगालाई बोलाए, जसलाई देखेर हामी सबै विस्मित भयौँ । उसको अनुहार ठीक मां अनुरक्ताको जस्तै थियो । यद्यपि मांको अनुहारमा चाउरी परेको थियो र यी भरखरै बालिका थिइन्, तर अनुहारमा धेरै साम्य स्पष्ट देखिइरहेको थियो । सत्संगाले गुरुदेवको अघिल्तिर आउनासाथै दुवै हात जोडिन् र मांजसरी नै चरणमा निहुरिन पुगिन् ।

गुरुदेवले भन्नुभयो कुन प्रकारले उहाँकी शिष्या मां अनुरक्ताले आफ्नो मृत्युको क्षणमा उहाँसँग वचन लिएकी थिइन् कि आगामी जन्ममा बाल्यावस्था हुनासाथ गुरुदेवले उनलाई खोजेर निकाल्नुहुनेछ र साधनात्मक पथमा अग्रसर गराइदिनुहुनेछ । यी कन्या सत्संगा उनै मां अनुरक्ता हुन् । गुरुदेवले उनलाई दीक्षा दिनुभयो, आफ्नो गलाको माला झिकेर उनलाई दिनुभयो र गुरु मन्त्र दिएर त्यहाँबाट पुनः हिँड्नुभयो । आफ्ना प्रत्येक शिष्य शिष्याको जन्मदेखि लिएर मृत्युसम्म प्रतिपल उहाँले ध्यानमा राख्नुहुन्छ र उहाँको प्रत्येक क्षण नै शिष्यको कल्याणको चिन्तनमा नै बितेको छ । उनीहरू धन्य छन् जसलाई उहाँको शिष्यत्व प्राप्त भएको छ ।

## तन्त्र मार्गका सिद्ध पुरुष

सही अर्थमा हेर्ने हो भने तन्त्र भारतवर्षको आधारको रूपमा रहेको छ। तन्त्रको तात्पर्य व्यवस्थित तरीकाबाट कार्य सम्पन्न हुनु हो । प्रारम्भमा त तन्त्र भारतवर्षको सर्वोच्च पूँजीको रूपमा रहेका थियो तर पछि बिस्तारै बिस्तारै केही स्वार्थी र अनैतिक तत्व यसभित्र आइपुगे जसलाई न त तन्त्रको ज्ञान थियो न यसको बारेमा केही विशेष कुरा नै जान्दथे । देह सुख एवं भोगलाई नै उनीहरूले तन्त्र मानेका थिए ।

तन्त्र त भगवान् शिवको आधार हो, उहाँद्वारा तन्त्रको प्रस्फुटन भएको थियो । जुन कार्य मन्त्रका माध्यमबाट सम्पादित हुन सक्दैन, त्यसलाई तन्त्रद्वारा निश्चित रूपमा स्पष्ट गर्न सकिन्छ । मन्त्रको तात्पर्य हो प्रकृतिको त्यस विशेष सत्तालाई अनुकूल बनाउनको लागि प्रयत्न गर्नु र अनुकूल बनाएर कार्य सम्पादित गर्नु । तर तन्त्रका क्षेत्रमा यो स्थिति सर्वथा विपरीत छ । यदि सीधासादा तरीकाबाट प्रकृति वशवर्ती नभएमा उसलाई बलपूर्वक वशमा पारिन्छ र यही क्रियालाई तन्त्र भनिन्छ ।

तन्त्र तरवारको धारझैं छ । यदि यसको सही प्रकारबाट प्रयोग गरियो भने तुरुन्तै र अचूक सिद्धिप्रद हुन्छ तर यसविपरीत यदि थोरै पनि असावधानी वा केही गलत गरियो भने तन्त्र प्रयोगले स्वयं कर्तालाई नै समाप्त पारिदिन्छ । यस्ता कठिन चुनौतीलाई निखिलेश्वरानन्दजीले स्वीकार गर्नुभयो र तन्त्रको क्षेत्रमा ती स्थितिहरूलाई स्पष्ट पार्नुभयो जो स्वयंमा हालसम्म गोपनीय रहेका थिए ।

उहाँले दुर्गम र कठिन साधनाहरूलाई तन्त्रको माध्यमबाट सिद्ध गरेर यो मार्ग अपेक्षाकृत सुगम र सरल छ भनी देखाइदिनुभयो । स्वामी निखिलेश्वरानन्दजी तन्त्र क्षेत्रका सबै कसीहरूमा खरो उत्रनुभयो तथा तिनमा अद्वितीयता प्राप्त गर्नुभयो ।

त्रिजटा अघोरी तन्त्रको एउटा परिचित नाम हो । तर यदि सही अर्थमा भन्ने हो भने स्वामी निखिलेश्वरानन्द तन्त्रको क्षेत्रमा अन्तिम नाम हुनुहुन्छ भन्ने तथ्य गुरुदेवको शिष्यत्व पाएर उनले स्वीकार गरिदिए । न त उहाँसँग जुध्न सकिन्छ, न यस क्षेत्रमा उहाँलाई परास्त गर्न सकिन्छ । एक प्रकारले हेर्ने हो भने सही अर्थमा उहाँ शिव स्वरूप हुनुहुन्छ जसको प्रत्येक शब्दले आफ्नो अर्थवत्ता बोकेको छ, जसले तन्त्रको माध्यमबाट ती गुप्त रहस्यहरूलाई उजागर गर्नुभएको छ जो अहिलसम्म गोपनीय रहेका थिए ।

## गृहस्थ स्वरूप

उहाँले कसैलाई पनि बाध्य पार्नुभएन कि उहाँलाई निखिलेश्वरानन्दजी भनियोस् अथवा श्रीमालीजी, योगी भनियोस् वा गृहस्थ । उहाँ त अत्यन्त सरल एवं सामान्यरूपमा रहनुहुन्छ ।

यस व्यक्तित्वलाई गृहस्थको रूपमा देखेर विश्वासै हुन सक्तैन कि यो साधारण धोती कुर्ता पहिरिएको जुन व्यक्तित्व देखिएको छ, उसभित्र ज्ञान र चेतनाको समुद्र तरङ्गित भइरहेको छ । यो विश्वास हुन सक्तैन कि यो त्यही व्यक्तित्व हो जसले पूरै हिमालयलाई आफ्ना गोडाले नापेको छ, जसले एउटा एउटा क्षणलाई पूर्ण सार्थकताका साथ व्यतीत गरेको छ ।

उहाँले वेद, पुराण, उपनिषद्, ज्योतिष, आयुर्वेद, मीमांसा, यज्ञ, कर्मकाण्ड सबै क्षेत्रमा पूर्णता प्राप्त गर्नुभयो र सबै विषयमा ग्रन्थ लेख्ने चेष्टा गर्नुभयो, किनकि उहाँको जीवनको ध्येय नै लुप्त भइसकेका प्राचीन विद्याहरूलाई पुनर्जीवित पार्नु रहेको छ । उहाँद्वारा लिखित एउटा एउटा ग्रन्थ प्रामाणिक छ जसको एउटा एउटा पन्ना, एउटा एउटा अक्षर स्वयंमा रामायण हो, उच्चकोटिको आध्यात्मिक पवित्रताको बोध हो ।

गृहस्थ जीवनमा या व्यक्तित्वले आफ्नो उद्देश्य प्राप्तिको मार्गमा जति बाधा, कष्ट, झन्झट, अड्चन एवं समस्याहरू अनुभव गर्नुपर्‍यो, त्यति त शायदै कसैले अनुभव गरेको होला । पाइला पाइलामा लाञ्छना, तिरस्कार, अपमान एवं व्यंग्यवाणका तीता घुट्की निल्नुपरेको छ । समाजका षडयन्त्रहरूको विषको माला आफ्नो गलामा लगाउनुपरेको छ । यति हुँदाहुँदै पनि यो व्यक्तित्व स्वयंमा अडिग हुँदै आफ्नो पथमा गतिशील छ ।

वस्तुत: उहाँको गृहस्थ जीवन अत्यन्त सुखी र सफल छ । गृहस्थको रूपमा स्वयंलाई पूर्णरूपमा लुकाउनुभएको छ । उहाँको भनाइ छ यदि गृहस्थमा रहनु छ भने सामान्य गृहस्थी नै बनेर रहनुपर्दछ । गृहस्थीमा रहेर पनि उहाँले गुरुदेवको आज्ञाको निर्वाह गर्नुभएको छ । भारतवर्षको हराइसकेको थातीलाई पुन: जीवित गरेर समाजलाई दिनुभएको छ । यस्ता अद्वितीय गृहस्थ योगी स्वामी निखिलेश्वरानन्दजीमा सयौँसयौँपटक वन्दन गर्दछु ।

– योगी विश्वेश्रवानन्द

प्रसन्न मुद्रामा सद्‌गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यू

धर्मपत्नी भगवतीदेवी श्रीमालीको साथमा सद्‌गुरुदेव

बाल्यावस्थामा आफ्नी आमा रुपादेवी श्रीमालीको साथमा

तान्त्रिक सम्मेलनमा

'मन्त्र तन्त्र यन्त्र विज्ञान' हेर्दै

# "अभ्युत्थानं अधर्मस्य ग्लानिर्भवति भारत !"

*विश्वामित्रले आफ्ना गुरुसित सोधे– मेरो जीवनको लक्ष्य के हो र म कुन प्रकारले त्यस लक्ष्यलाई हासिल गर्न सक्छु ? ब्रह्माले बताए कि जीवनका दुई पक्ष छन्– भोग र योग । योगद्वारा जीवनलाई जसरी पूर्णता प्रदान गर्न सकिन्छ, त्यसैगरी भोगद्वारा पनि सकिन्छ । दुईटै बाटो के हुन्, यसैको उद्घाटन सद्गुरुदेवले आफ्नो एउटा प्रवचनमा गर्नुभएको थियो । प्रस्तुत छ, उहाँको चिर-परिचित शैली–*

**नो व नित्यं मधुरं सदैव, दिव्यौ वतां वै परिपूर्ण रूपं ।**

**नित्यं वदान्य वरितं सहितं सदैव, गुरुर्वै प्रणम्यं त्वमेवं प्रणम्यं ।**

विश्वामित्रजस्ता तेजस्वी र क्रान्तिकारी ऋषिले यस श्लोकमा आफ्नो तथ्यलाई स्पष्ट गर्दै आफ्ना गुरुसँग प्रश्न गरे– मेरो जीवनमा केवल चार चिन्तन छन्–

–म यो जान्न चाहन्छु कि मेरो जीवनको उद्देश्य, लक्ष्य के हो ?

–दोस्रो, म जान्न चाहन्छु कि मैले आफ्नो जीवनलाई कुन प्रकारले अग्रसर गरूँ, कुन प्रकारले अगाडि बढाऊँ ?

–तेस्रो, म आफ्नो जीवनलाई कुन प्रकारले दिव्यताले ओतप्रोत गर्न सक्छु, आफैमा चेतनायुक्त बनाउन सक्छु ?

–जीवनमा त्यो क्षण कहिले आउला जब गुरु मेरो सामु हुनुहुनेछ, जब गुरुले प्रवचन गरिरहनुभएको हुनेछ, म उहाँको सामु बसिरहेको हुनेछु, उहाँले अमृत वर्षाइरहनुभएको हुनेछ र म आफ्नो कानको माध्यमबाट, आँखाको माध्यमबाट, शरीरको अङ्ग अङ्गबाट, हजारौं कान र हजारौं आँखाबाट त्यस अमृत तत्त्वलाई समेट्दै आफ्नो प्राण तत्त्वलाई जाग्रत गर्न अझै अग्रसर हुन सक्नेछु । म केवल त्यस विधिलाई, ती विचारहरूलाई, त्यो चिन्तनलाई जान्न चाहन्छु ।

जब विश्वामित्रले गुरुसँग सोधे कि मेरो जीवनको उद्देश्य, लक्ष्य के हो ? गुरुले भने कि जीवनलाई दुई किसिमले जिउन सकिन्छ– एउटा जीवन भोगको माध्यमबाट र एउटा जीवन योगको माध्यमबाट । दुईवटा मात्र बाटा छन्, तेस्रो बाटो त हुनै सक्दैन । जीवनको यदि एउटा पक्ष योग हो भने भोग अर्को पक्ष हो ।

कहिल्यै कसैले यो प्रश्न उठाएन, केवल विश्वामित्रले मात्रै उठाए । उनले उभिएर सोधे कि मेरो जीवनको लक्ष्य र उद्देश्य के हो ? के भोग लक्ष्य हो ? यदि हो भने पूर्ण भोगका साथ जीवनलाई बिताऊँ ?

जे कुरा हामीले प्राप्त गर्न सकेनौं त्यो भोग हो । तृष्णालाई भोग भनिन्छ । भोगमा इच्छापूर्ति हुँदैन । भोगको तात्पर्य हो कि हामी निरन्तर प्यासी बनिरहूँ, निरन्तर न्यून बनिरहुँ । भोगीले जीवनमा पूर्णता प्राप्त गर्नै सक्दैन । भोगीका इच्छाहरू जीवनमा पूर्ण हुँदैनन् । जोसँग पाँच हजार छ, ऊ यो सोच्दछ कि ऊसँग दस हजार हुनुपर्छ, पच्चीस हजार हुनुपर्छ । जोसँग पर्याप्त धन छ, उसका अन्य तृष्णा पनि हुन्छन्, इच्छाहरू हुन्छन् । छोरा भएमा उसको विवाहको कुरा सोच्लान्, विवाह भइसकेको छ भने नाति नातिनीहरूको बारेमा सोच्लान्, आफ्नो बुढ्यौलीको विषयमा सोच्लान् । बुढ्यौलीतिर लागेर पनि हरेक समय चिन्तामा रहलान्, तनावग्रस्त मात्रै रहलान् । जो तनावग्रस्त जीवनलाई मात्र जिउन सक्छ, ऊ भोगी हो । यो सारा संसार भोगको नै चिन्तन पद्धतिमा यसैले अगाडि बढिरहेको छ कि उसले कुनै बाटो भेटेको छैन, उसलाई थाहै छैन कि जीवनको लक्ष्य र उद्देश्य के हो ?

तिमीले त पूर्ण भोगका साथ जीवनलाई बिताउन पनि पाइरहेका छैनौ । तिमी पूर्ण भोगी भएको भए पनि तिमी मेरो शिष्य बन्न सक्छौ ! पूर्ण भोगी पनि बन्न सक्तैनौ तिमी ! विगत पच्चीस हजार वर्षमा केवल कृष्ण मात्रै यस्ता व्यक्तित्व भए जो आफैमा पूर्ण भोगी थिए ।

मानिसहरूले के भन्लान् भन्ने चिन्ता गर्नु आवश्यक छैन किनकि उनीहरूको काम त भन्ने नै हो । तिमीले केही गर्दा पनि भन्नेछन्, केही नगर्दा पनि भन्नेछन् । तिम्रो समाजले तिमीलाई गाली गर्नुबाहेक अरू केही पनि गर्न सक्तैन, तिम्रो प्रशंसा गर्न सक्दैन । तिमी जुन समाजमा बाँचिरहेका छौ,

त्यस समाजमा आलोचना बाहेक केही छँदैछैन । आलोचनाको विष जति मैले पिएको छु, शायद त्यसको हजार भागको एक भाग पनि तिमीले पिएका छैनौ । मैले हर क्षण, हर पल त्यस आलोचनालाई सहेको छु ।

कृष्णले सोचे कि यदि भोगमा जीवन व्यतीत गर्नुछ भने पूर्णताका साथ व्यतीत गर्नुछ । यसमा if, and, but लाग्दैन, त्यसमा सोच्नु विचार गर्नु हुँदैन । र, जब आलोचना सहनु नै छ भने इतिहासमा पूर्णरूपले आलोचना होस् र मानिसले याद राखून् कि यस्तो पनि व्यक्ति थियो । निकृष्ट जीवन जिउनुमा कुनै अर्थ छैन । बदनामी हुँदा पनि इतिहासमा नाम त कोरिनेछ । इतिहासमा यदि नाम कोरिएको छैन भने, मानिसहरूको मन मस्तिष्कमा हाम्रो नाम अंकित भएको छैन भने यस्तो जीवनको कुनै उद्देश्य पनि छैन, कुनै लक्ष्य पनि छैन ।

तिमीलाई भोगी बन भनेर म भन्दिन । म भन्छु कि तिमी योगी बन, तर पूर्ण आनन्दका साथ भोगी बन । हरेक क्षण डराएर, रोएर प्रेम गर्न सकिन्न । प्रेममा दुर्गन्ध हुँदैन, यो त हृदय खोलेर गर्ने कुरा हो । तिम्रो प्रेम आफैमा अत्यन्तै निकृष्ट छ । प्रेमको वर्णन त वेदमा गरिएको छ । ऋग्वेदमा पनि भनिएको छ कि जहाँ प्रेम छैन, त्यहाँ सरसता बन्नै सक्दैन, जीवनमा छलछलाएको पानी बहन सक्दैन । यस्तो व्यक्तिले कोइलीको कुहु सुन्न सक्दैन, बसन्त आएर जाँदा पनि उसलाई थाहा हुँदैन । हजारौं मानिसहरू यस्तो जीवन बिताइरहेका छन् । यिनीहरूले प्रेमको परिभाषा बुझ्दैनन्, वासना मात्रै बुझ्छन् ।

यदि हरेक क्षण तिमी डराएर बसिरहेका छौ भने भोगमा पूर्णताका साथ उत्रन सक्दैनौ । यदि नदीले मानिसले मलाई बगिरहेको देख्लान् भनेर डर मान्ने हो र बग्न छोड्ने हो भने ऊ कहिल्यै समुद्रसँग मिल्न सक्दैन । नदीले यस कुराको परवाह गर्दैन कि बाटोमा बाँध छ कि पत्थर । उसलाई त बस यस्तो मात्र ध्यान रहन्छ कि मलाई पुग्नुछ र समुद्रमा मिल्न जानुछ । यसैले नदी सही अर्थमा प्रेमिका हो । नदीको छलछलाएको पानी जीवन हो । तालको पानी त सड्छ, त्यो गन्हाउँछ र त्यसमा हिलो जम्छ । तिम्रो जीवन पनि एकातिर रोकिएको छ, एउटा परिवेशमा रोकिएको छ– तिमी, तिम्री श्रीमती, दुई छोरा, दुई छोरी, भाइ, बहिनी बस, यसैको वरिपरि घुमिरहेका छौ । छिमेकीमा कुनै बाँचिरहेको छ, कोही मरिरहेको छ, तिमीलाई चिन्ता छैन, तिमी र तिम्रो समाजले जीवन देखेकै छैन ।

तर विश्वामित्र यस्तो पहिलो व्यक्ति थिए जसले पूर्ण संन्यास लिएर पनि विवाह गरे । मानिसहरूले भने– यो के भइरहेको छ ? उनले भने– यसमा के गलत छ ? मानिसहरूले भने– तिमीले यसरी अप्सराहरूलाई नचाउन पाउँदैनौ । विश्वामित्रले भने कि म अवश्यै मेनकालाई नृत्य गराउनेछु । म यस्तो

‘यदा यदा हि धर्मस्य ग्लानिर्भवति...’ जब यस्तो समय आउँछ तब ‘अभ्युत्थानं’ त्यसबेला मुर्दा शरीरलाई उठाउनका लागि, ‘तदात्मानं’– उनीहरूको आत्मालाई जगाउनका लागि, ‘सृजाम्यहं’– म स्वयं उभिन्छु, मैले स्वयं सम्झाउँछु । मैले त्यही कुरालाई तिमीसमक्ष दोहोऱ्याइरहेको छु, पाँच हजार वर्षपछि त्यही बताइरहेको छु तिमीसित ।

मानिसहरूले के भन्लान् भन्ने चिन्ता गर्नु आवश्यक छैन किनकि उनीहरूको काम त भन्ने नै हो। तिमीले केही गर्दा पनि भन्नेछन्, केही नगर्दा पनि भन्नेछन्। तिम्रो समाजले तिमीलाई गाली गर्नुबाहेक अरु केही पनि गर्न सक्दैन, तिम्रो प्रशंसा गर्न सक्दैन । तिमी जुन समाजमा बाँचिरहेका छौ, त्यस समाजमा आलोचना बाहेक केही छँदैछैन । आलोचनाको विष जति मैले पिएको छु, शायद त्यसको हजार भागको एक भाग पनि तिमीले पिएका छैनौ । मैले हर क्षण, हर पल त्यस आलोचनालाई सहेको छु ।

गर्छु किनकि जहाँ विद्रोह छैन, जहाँ हाँक छैन, जहाँ प्राणमा तागत छैन, क्षमता छैन उसले जीवनमा केही गर्न पनि सक्दैन । खिइएको मानिसले केही गर्न सक्दैन । जो रोइरहेको छ, जो मरिरहेको छ, उसबाट के नै आशा गर्न सकिन्छ ? मुर्दाले केही पनि गर्न सक्दैन ।

जसले यस रोगी समाजको बीचमा उभिएर विद्रोह गर्न सक्छ, ऊ मेरो शिष्य बन्न सक्छ । जो उभिन सक्छ, च्यालेन्जका साथ, क्षमताका साथ, जसले विद्रोह गर्न सक्छ, ऊ मेरो शिष्य बन्न सक्छ, रोगी व्यक्ति मेरो शिष्य बन्न सक्दैन ।

विश्वामित्रले जीवनमा हर क्षण च्यालेन्ज उठाए । समाजले नगर भनेका कुरालाई उनले गरे । कृष्णले पनि विश्वामित्रको दुई हजार वर्षपछि त्यही रूप अपनाए । कृष्ण अति मस्तीका साथ यमुनाको किनारामा बाँसुरी बजाइरहेका थिए। उनलाई यस कुराको परवाह नै थिएन कि कसले के गरिरहेको छ भनेर । घर जाँदा नन्दले गाली गर्थे, यशोदाले धेरै हप्काउँथिन् । जब कृष्णले बाँसुरी बजाउँथे गाउँका ठिटीहरू, आइमाईहरू दौडेर आउँथे, उनलाई होश नै हुँदैनथ्यो, उनी रोकिनै पाउँदैनथे ।

यदि तिमी भोगमय भएका छौ भने के तिमीभित्र कृष्णको जस्तो आकर्षण, क्षमता आउन सकेको छ ? आउनै सक्दैन ! त्यस आकर्षण शक्तिका लागि पनि प्राण तत्त्व चाहिन्छ । भोगी तिमी बन्न सक्दैनौ किनकि जसको प्राण तत्त्व जाग्रत छ, उसैले प्रेम गर्न सक्दछ । तिमीले प्रेम गर्नै सक्दैनौ, तिमीले त वासना गर्न सक्छौ । तिमीले वासना गरेका छौ र वासनाको फल केवल सन्तान हुन्छ । यसैले भर्तृहरिले भनेका छन्–

**'भोगे रोग भयं'**

जहाँ भोग छ, त्यहाँ रोग छ । भोगबाट रोगको उत्पत्ति हुन्छ । तर भोग त आफैमा आनन्ददायक चीज हो । हामी प्रत्येक क्षणको भोग गरौं, प्रत्येक वस्तुको भोग गरौं र संसारमा प्रभुले यति धेरै भोगलाई फैलाउनु भएको छ कि हामीले त्यसलाई बुझ्न सकिरहेका छैनौं । हामीले भोगको शब्दलाई निकृष्ट शब्दमा बाँडिदियौं । म त तिमीलाई यो भन्छु कि भोग गर्ने हो भने पूर्णताका साथ गर, प्रेम गर्ने हो भने पनि पूर्णताका साथ गर । कृष्णले कहिल्यै पनि कुनै प्रकारको डर पालेनन् । उनी गोपीहरूसँग छुटेर मथुरा गएर पनि कुब्जासँग प्रेम गरे । उनले भने कि म बिनाप्रेम रहन पनि सक्दिन किनकि प्रेम नै जीवनको आधार हो । कृष्णको जीवन भोगमय भन्न सकिन्छ, तर भोगमय भएर पनि कृष्णलाई योगेश्वर भनिन्छ । यदि तिम्रो प्राण तत्त्व जाग्रत छ भने तिमी बिल्कुल विरक्त भएर भोगको आनन्द लिन सक्छौ ।

कहिलेकाहीं बिहानै उठेर हेर त प्रकृति कति सुन्दर हावा बहाउँछिन् । यदि तिमी साढे पाँच, छ बजे बिहान उठेर हेर्छौ भने पूर्वतिरबाट रातो गोलो बाहिर देखा परिरहेको देख्नेछौ, आकाश अति नै लालिमायुक्त हुन्छ, क्षितिजमा लालिमा फैलिएको हुन्छ । भोग त फैलाउनुभयो प्रभुले, तिमीले त्यस भोगलाई देखेनौ, कोशिश गरेनौ । तिम्रो नजिकैबाट तिम्रो बच्चा जाँदैछ, तिमीले उसलाई काखमा कहिल्यै पनि उठाएनौ किनकि तिमीलाई काममा जानुछ । त्यो पनि भोग थियो तर तिमीले जीवनको चिन्तनलाई बुझ्दै बुझेनौ । त्यसैले तिमीले आफूलाई भोगी पनि भन्न सक्दैनौ । तिमी अवश्यै रोगी छौ । रोगी त्यसैले छौ कि तिमी डराएर

काम गरिरहेका छौ ।

र, विश्वामित्रले यही सोधिरहेका छन् कि जीवनको मर्म के हो, जीवनलाई व्यतीत कसरी गर्ने ? उनका गुरु ब्रह्माले यो भनेनन् कि भोग नगर । उनले भने कि तिमी भोगमय बन, तिमीले भोग गर, तर द्रष्टा बनेर गर, त्यसमा लिप्त नहोऊ । एकातिर किनारामा उभिएर हेर, प्रकृतिले फैलाएको भोगमा आनन्द लेऊ, पातको संगीतलाई सुन, कहिलेकाहीँ नदीको किनारामा बसेर लहरले सुनाएको संगीतलाई सुन्ने कोशिश गर । तर त्यो तिमीले गर्दैनौ । त्यो तिमी यसकारण गर्न सक्दैनौ कि तिमीलाई भोगको परिभाषा थाहा छैन । तिमी र तिम्रो समाजले भोगलाई वासनासँग जोड्यौ । तिमी त्यस समाजको अङ्ग हौ जो स्वयं रोगी छ । यसैले रोगी छ कि यहाँ आमाले हरेक क्षण आफ्नी छोरीलाई काखमा च्यापिरहेकी हुन्छे । ऊ हाँस्न सक्दिन, घर बाहिर जान सक्दिन, परपुरुषसित कुरा गर्न सक्दिन, यताउता जान सक्दिन । विवाह भएपछि श्रीमान्ले जान दिन्नन्, सासुले जान दिन्नन् । विरुद्ध जानै सकिन्न ।

तिमीले भोगको बारेमा जुन कुरा बुझिरहेका छौ, त्यसलाई मैले भोगिसकेको छु । मैले प्रेमको परिभाषा जानेको छु, मैले प्रेम गर्ने कला जानेको छु । मैले प्रेम दिन पनि सक्छु । मैले भमराको संगीतलाई सुनेको छु, मैले उदाएको सूर्यलाई देखेको छु । मैले सूर्यसँग कुरा गर्ने कोशिश गरेको छु । मैले लहराएको हावाको अनुभव गरेको छु । मैले हिमालयको हिउँमा पनि आनन्दको स्रोतलाई खोजेको छु । मैले जीवनलाई धेरै नजिकबाट देखेको छु– त्यस संन्यासलाई पनि र त्यस गृहस्थलाई पनि । त्यसैले जीवनलाई भोगमय बिताऔँ तर प्राणको साथमा बिताऔँ, शरीरको साथमा होइन किनकि प्रेम शरीरसित हुन सक्दैन, प्राणसित मात्र प्रेम हुन सक्छ ।

यसैले, विश्वामित्रले सोधे कि जीवनको उद्देश्य के हो ? योगमय बन्ने हो वा भोगमय ? भोगमय नै बन्ने हो भने द्रष्टा बनेर मात्र बन । हामीले किनारामा उभिएर हेरौँ, हामी लिप्त नहोऔँ । जसरी महको माहुरी महमा भिज्छ, उसको पखेटा भिज्छ, त्यो मर्दछ । त्यसरी नै त्यसमा लिप्त हुनु जरुरी छैन । तिम्री पत्नी छिन्, पुत्र छन्, आफ्नो काम गरिरहेका छन्, तिमीले जीवनलाई देखिरहेका छौ । कृष्णले यही बताइरहेका छन् कि अर्जुन ! तिमी त्यसमा लिप्त नहोऊ, तिमी जब यो सोच्दछौ कि भीष्म तिम्रा हजुरबुवा हुन् तब तिमी गल्ती गरिरहेका छौ । यदि तिमीले हजुरबुवा ठान्छौ भने तिमी द्रष्टा नभएर लिप्त हुनेछौ र युद्ध गर्न सक्दैनौ, तिमीले युद्धमा विजय प्राप्त गर्न सक्दैनौ । तिमी यो नसोच कि यिनी गुरु हुन्, तिमीले त यो ठान कि यिनी द्रोण हुन्, यिनी कृपाचार्य हुन् । मलाई केवल लड्नु छ, विजय प्राप्त गर्नुछ ।

यसैले ब्रह्माले विश्वामित्रसित भने कि तिमी भोग त भोग तर दृष्टा बनेर भोग, प्रकृतिसित प्रेम गर, बहिरहेको हावासित प्रेम गाँस, प्रेम गर्ने कला सिक । म बसेर पातहरूको आवाज सुनिरहेको छु, त्यसको गायनलाई सुनिरहेको छु, त्यसको गीतलाई सुनिरहेको छु । आँखा बन्द गरेर पनि म गायनलाई सुन्न सक्छु । तिमी जब आफ्नो प्राणमा उत्रन्छौ, तिमीले देवताहरूको संगीत सुन्नेछौ । कृष्णले भनेका छन् कि म प्रेमले जीवनलाई संगीतमय गर्न सिकाउँछु ।

कृष्णजस्ता व्यक्तिले यदि श्रीमद्भगवद्गीताजस्तो ग्रन्थ उच्चरित गर्न सक्दछन् भने निश्चय नै उनी अत्यन्तै विद्वान् होलान् । श्रीमद्भगवद्गीता स्वयंको जीवनकथा हो । 'श्रीमद्'को अर्थ हो– मेरो जीवन के हो, यो बुझ्ने कला छ त्यसमा र 'भगवद्'को तात्पर्य हो कि यस जीवनलाई पूर्ण तत्त्वसम्म पुऱ्याउने चिन्तन र क्रिया के हो ? र, गीतको अर्थ हो गेय, गाइएको चीज, संगीतमय । गीता कुनै पढ्ने चीज होइन, यो त एउटा गुंजरण हो, गाउने चीज हो, गाउनुको तात्पर्य यो होइन कि हारमोनियम लिएर गाऔँ । श्रीमद्भगवद्गीताको तात्पर्य '**धर्मक्षेत्रे कुरुक्षेत्रे**...' मात्र हो । श्रीमद्भागवद्गीता एउटा इतिहास मात्रै होइन, यो त जीवनको चेतना हो, संगीत हो ।

कृष्णले स्पष्ट भनेका छन्– '**यदा यदा हि धर्मस्य ग्लानिर्भवति भारत अभ्युत्थानं अधर्मस्य तदात्मानं सृजाम्यहम् ।**' जब जब धर्मको हानि हुन्छ– धर्मको तात्पर्य हिन्दु, मुस्लिम, सिख र ईसाइ होइन, त्यसबेला यी थिएनन्, त्यसबेला या त शैव थिए या त वैष्णव । विष्णुलाई मान्नेहरू थिए वा शिवलाई मान्नेहरू थिए । धर्मको ग्लानिको अर्थ हो कि जहाँ जहाँ अज्ञान आउँछ, जहाँ जहाँ भौतिकता छाउँछ, जब व्यक्तिमा ढुकढुकी खतम हुन्छ, जब मानिस मुर्दा बनेर हिँड्न थाल्छ... । धृतराष्ट्र बिल्कुल मुर्दा बनेर हिँडिरहेका थिए । उनलाई हरेक क्षण यही चिन्ता थियो कि कसरी आफ्नो छोरालाई राजगद्दी दिलाऊँ । दुर्योधन मुर्दा बनेर हिँडिरहेको थियो, उसमा चेतना थिएन, विदुरमा थियो तर भीष्ममा थिएन, द्रोणमा थिएन, कृपाचार्यमा थिएन, अश्वत्थामा पनि थिएन र उनीहरू सबै समाप्त हुन गए ।

'यदा यदा हि धर्मस्य ग्लानिर्भवति...' जब यस्तो समय आउँछ तब 'अभ्युत्थानं'

पूज्यपाद गुरुदेव
डॉ0 नारायण दत्त श्रीमाली

जुन दिन तिम्रो आँखा दिव्य बन्न सक्छ, जुन बेला पहिलेका जन्म देख्न सक्छौ, त्यतिबेला मैले भनेका कुराहरू तिमीले साकाररूपमा देख्न थाल्नेछौ । तिमीले देख्नेछौ कि महाभारत युद्ध भइरहेको छ, म तिमीलाई बताइरहेको छु र यही श्लोक उच्चारण गरिरहेको छु जुन आज तिमी सामु बोलिरहेको छु । त्यसबेला पनि म यही चिच्याएर भनिरहेको थिएँ कि तिमीलाई युद्धमा विजय प्राप्त गर्नुछ, अर्जुन त एक निमित्त मात्र थिए । यस कुरालाई अर्जुनलाई मात्रै बताइरहेको थिइन, तिमीलाई मात्रै बताइरहेको छैन, तिमी सामु नभएका भारतवर्षका तिनीहरू सबैलाई सुनाइरहेको छु ।

त्यसबेला मुर्दा शरीरलाई उठाउनका लागि, 'तदात्मानं'– उनीहरूको आत्मालाई जगाउनका लागि, 'सृजाम्यहं'– म स्वयं उभिन्छु, मैले स्वयं सम्झाउँछु । मैले त्यही कुरालाई तिमीसमक्ष दोहोऱ्याइरहेको छु, पाँच हजार वर्षपछि त्यही बताइरहेको छु तिमीसित । म भन्न सक्दिन कि तिमीले जीवनमा फर्केर कति पछाडिसम्म हेर्न सक्छौ । तर जुन दिन तिम्रो आँखा दिव्य बन्न सक्छ, जुन बेला पहिलेका जन्म देख्न सक्छौ, त्यतिबेला मैले भनेका कुराहरू तिमीले साकाररूपमा देख्न थाल्नेछौ । तिमीले देख्नेछौ कि महाभारत युद्ध भइरहेको छ, म तिमीलाई बताइरहेको छु र यही श्लोक उच्चारण गरिरहेको छु जुन आज तिमी सामु बोलिरहेको छु । त्यसबेला पनि म यही चिच्याएर भनिरहेको थिएँ कि तिमीलाई युद्धमा विजय प्राप्त गर्नुछ, अर्जुन त एक निमित्त मात्र थिए । यस कुरालाई अर्जुनलाई मात्रै बताइरहेको थिइन, तिमीलाई मात्रै बताइरहेको छैन, तिमी सामु नभएका भारतवर्षका तिनीहरू सबैलाई सुनाइरहेको छु ।

**'अभ्युत्थानं अधर्मस्य ग्लानिर्भवति भारत !'**– पूरा भारतवर्षमा जता मुर्दा शरीर छ, उनीहरूलाई मैले तिम्रो माध्यमबाट सुनाइरहेको छु । उनले अर्जुनको माध्यमबाट सुनाइरहेका थिए पूरा महाभारतका योद्धाहरूलाई जो कौरव दलमा थिए, पाण्डव दलमा थिए, हस्तिनापुरमा थिए, अर्जुन निमित्त मात्रै थिए ।

आज म पनि त्यही इतिहास दोहोऱ्याइरहेको छु, म बसेर बोलिरहेको छु र तिमी सुनिरहेका छौ । तर तिमीलाई मात्रै मैले सुनाइरहेको छैन । जहाँ मुर्दा शरीर छ, उनीहरूलाई पनि मैले बताइरहेको छु किनकि कतै न कतै उनीहरू पनि मसँग जोडिएका अवश्यै छन् ।

मुर्दाको अर्थ हो जसमा कुनै चेतना छैन, हाँसो छैन, मुस्कुराहट छैन । मैले तिमीलाई मसित मुस्कुराएर मात्र भेट्नू भन्छु तर तिमी त थोरै दाँत देखाएर ङिच्च मात्रै परेर उभिन्छौ । त्यसलाई मुस्कान भनिँदैन । तिमी अलिकति गाला फुलाइदिन्छौ र खुशी हुन्छौ । तिमी ठान्छौ कि मैले खुशीका साथ गुरुजीसित भेटेँ । न तिमी हाँस्यौ, न तिम्रो समाजले तिमीलाई हाँस्न दियो ।

गुरु जाग्रत हुनुपर्छ । जो जाग्रत छ, उसले मुस्कुराउन जानेको हुन्छ, उसले नै प्रेम गर्न सक्छ, ऊ बालकहरूका साथ पनि खेल्न सक्छ, बूढाहरूसित प्रवचन पनि गर्न सक्छ । उसलाई प्रवचन गर्ने कलामा देख्यौं भने बिल्कुल छुट्टै रूपमा देख्छौँ र उसले शेर शायरी सुनाउँछ भने बिल्कुलै अर्को अन्दाजमा सुनाउँछ । हामीले कल्पना पनि गर्न सक्दैनौ कि यही मानिस हिजो मञ्चमा उभिएर प्रवचन गरिरहेका थियो र आज एकदमै पृथक् अन्दाजमा गजल गाइरहेको छ, गजब छ ! र, आज भने नदीको किनारामा बसेर नदीको संगीत सुनिरहेको छ । फेरि आज यी बच्चाहरूसँग मुस्कुराइरहेको छ, यो कस्तो व्यक्तित्व हो ? जीवनको प्रत्येक क्षणमा जो जीवित छ, जाग्रत छ, ऊ नै गुरु हो ।

जब विश्वामित्रले सोधे तब गुरुले बताए कि यदि तिमीले भोगमय जीवन बिताउन सक्दैनौ भने योगको माध्यमबाट पनि जीवन जिउन सकिन्छ । तर यो कुरा त्यति सरल छैन । विषययुक्त जीवन त सजिलो छ, वासनात्मक जीवन बिताउनका लागि कुनै स्कुलमा पढ्नु पर्दैन, पत्नीले पुत्र कसरी पाउँछिन्, कतै ट्रेनिङ्ग दिइँदैन, आवश्यकता नै छैन । वासनाका लागि कुनै ज्ञानको जरुरी छैन । तर प्रेमका लागि ज्ञानको आवश्यकता पर्छ, योगका लागि चेतनाको आवश्यकता

पर्छ । यसैले भनिन्छ यदि तिमी भोगमा रहन सक्दैनौ भने द्रष्टा बन्न सक्दैनौ किनकि जब द्रष्टा बन्छौ तब जीवनमा जे भइरहेको छ, बस एकातिर उभिएर हेरिरहन्छौ । श्रीमतीले आफ्नो काम गरिरहेकी छिन्, छोराले आफ्नो काम गरिरहेको छ, राम्रो गरिरहेको छ वा नराम्रो, आफ्नो कर्मको फल भोगिरहेको छ । तिमी दुःखी छौ, तिमीसितै आँसु बगाए, छातीमा टाँसे र तिमीसँगै रोए भने लिप्त भए ।

दोस्रो बाटो छ योग यानि जोडिनु । 'योग वाशिष्ठ' ग्रन्थको पहिलो श्लोकमा योगको तात्पर्य के हो, के जोडिनु पर्ने हो र कसरी जोडिने हो भन्ने बारे बताइएको छ । त्यसमा वशिष्ठले पत्नीको नाम लिएका छैनन्, उनले ईश्वरको नाम पनि लिएका छैनन् । वशिष्ठले भनेका छन् कि ईश्वर छँदैछैन, ईश्वरको अस्तित्व नै छैन । जे छ, त्यो ब्रह्म हो र ब्रह्म बाहिर छैन । वेदमा स्पष्ट भनिएको छ– 'अहं ब्रह्मास्मि'– आकाशमा ब्रह्म छैन, म स्वयं ब्रह्म हुँ । 'द्वितीयो नास्ति'– दोस्रो कुनै चीज नै छैन । जब तिमी यो ठान्छौ कि दोस्रो कुनै चीज नै छैन, तब मात्रै तिमी ब्रह्म बन्न सक्छौ । ब्रह्म बन्नका लागि त म मात्रै छु, बाँकी संसार खेल खेलिरहेको छ । सिनेमा हेर्न टिकट लिइएको छ र मेचमा बसेर हेर्ने काम भइरहेको छ कि हिरो आइरहेको छ, विवाह भइरहेको छ, जवान छोरो मर्दछ, आमा रोइरहेकी छिन् । यी सबै दृश्य देखेर कैयौं आइमाईहरू हलभित्र रुन्छन् पनि । हिरोइन नाच्छिन् भने पैसा पनि फ्याँक्ने काम शुरु हुन्छ, यो त पर्दामा मात्रै भइरहेको छ किनकि पाँच रूपैयाँको टिकट काटिएको छ ।

यस्तो द्रष्टा बन्न सके त भोग गर्न सकिन्छ । यदि यस्तो गर्न सकिन्न भने योग गर्नुपर्छ । दुवैमध्ये एउटा बाटो चुन्नु छ । योगको अर्थ हो– दुई तत्त्वलाई जोड्ने क्रिया । दुई तत्त्व केवल गुरु र शिष्य मात्र हुन सक्छ किनकि यसका अतिरिक्त बाँकी सबै चीज वासनात्मक छन् । गुरुसित प्रेम हुन सक्छ, वासना त हुनै सक्दैन, त्यसमा लेनदेनको हिसाब त छँदैछैन । गुरुले तिमीसित केही माग्न सक्दैनन्, तिमी बाध्य छैनौ गुरुलाई केही दिनका लागि । योगको अर्थ हो– गुरुसित पूर्णरूपमा जोडिने क्रिया, पूर्णरूपले, ओठले होइन, प्रार्थनाको माध्यमबाट पनि होइन, चरण छुने माध्यमबाट पनि होइन । तिमीले शिर झुकाउनु पर्नेछ, विनीत हुनुपर्नेछ, नम्र हुनुपर्नेछ । कबीरले स्पष्ट भनेका छन्–

**कबिरा ये घर प्रेम का,**
**खाला का घर नांहि ।**
**शीष उतारे भुई धरे**
**वो पचसे घर मांहि ॥**

गुरु र शिष्यको सम्बन्ध प्रेमको सम्बन्ध हो । यसमा ऊ मात्र उत्रन सक्छ जसले शिरलाई काटेर तल राख्न सक्छ । यदि तिमी शिरलाई लिएर हिंड्न सक्छौ, अहंकारलाई लिएर डुल्न सक्छौ भने गुरुको प्राणमा मिल्न सक्दैनौ । तिमी लखपति, करोडपति वा आफ्नो घरमा भए पनि त्यो तिम्रो आफ्नो गृहस्थ जीवन हो, त्योसँग मेरो कुनै लेनदेन छैन । मेरो तिम्रो सीधा सम्बन्ध प्राणको सम्बन्ध हो र जब प्राणको सम्बन्ध छ भने तिमीले विनीत हुनुपर्नेछ, झुक्नुपर्नेछ–

**नमन्ति फलिनो वृक्षः,**
**नमन्ति गुणिनो जनः**
**शुष्क काष्ठं च मूर्ख**
**च न नमन्ति कदाचन**

केवल फलदार हाँगा मात्र झुक्न सक्छ । जसमा गुण छ, जसमा ज्ञान आइसकेको छ, जसमा चेतना आइसकेको छ, ऊ झुक्न सक्छ । झुक्ने क्रिया अत्यन्त कठीन छ, सामान्य मानिस सजिलैसँग झुक्न सक्दैन । अत्यन्तै अहंले उभिएको हुन्छ, हरेक क्षण उसलाई उसको अहंले थपथपाउँछ । अहंलाई ऊ आफैले उत्पन्न गर्छ कि म छु, मसित पाँच लाख रूपैयाँ छ । म छु र म धेरै सुन्दर छु । ऐनामा स्त्रीले दुईपटक अनुहार हेर्छे कि म धेरै सुन्दरी छु । अरूले भने पनि नभने पनि ऊ आफैले आफ्नो अहंलाई पोषित गर्दछे । पुरुषले पनि आफ्नो अहंलाई पोषित गर्दछ कि म छु, म समाजको गन्यमान्य हुँ, मेरो व्यापार छ, मेरो पसल छ । तिम्रो अहंलाई अरूले होइन तिमी आफैले पोषित गरिरहेका छौ ।

यसैले झुक्नु अति कठीन कार्य हो किनकि झुक्नका लागि आफ्नो शिरलाई झुकाउनु पर्छ, आफूलाई मार्नुपर्छ । मृत्यु त जीवनको शृङ्गार हो, अत्यन्तै आनन्ददायक उत्सव हो, नृत्य हो, मृत्युसित डराउनु आवश्यक छैन, मृत्युसित त विषयी मानिस आत्तिन्छ । त्यसैले गुरुले पहिले मृत्यु दिन्छन् । जे तिमीसित छ– तिम्रो छल, तिम्रो झूट, तिम्रो असत्य, तिम्रो व्यभिचार, तिम्रो अहं– यी सबै पहिले समाप्त होस् । यिनीहरू समाप्त भएपछि गुणी मानिस आफै झुक्नेछ– 'नमन्ति गुणिनो जनः' । सुकेको दाउरा झुक्दैन । जुन दिन तिमी सुकेको दाउरा बन्छौ, त्यस दिन मैले भनेको कुराको तिमीमाथि कुनै असर पर्ने छैन ।

विश्वामित्रलाई गुरुले भने कि यदि तिमीलाई योगमा उत्रनु छ भने यति झुक कि तिमीले गुरुको चरणमा मन्दिर देख्न सक, गुरुको चरणमा तिमीले मस्जिद देख्न सक, गुरुको चरणमा तिमीले गुरुद्वारा देख्न सक । तब बुझ्नुपर्छ कि तिमी झुक्यौ । फुलेर उभिँदा जीवनमा सार आउनै सक्दैन । तिमी एकपटक झुकेर फेरि फुलेर तनक्क तन्किएर उभिन्छौ भने तिमी शिष्य बन्न सक्दैनौ । तिमीले योग पनि गर्न सक्दैनौ । योगको अर्थ

हो झुक्नु, आफैलाई मेट्नु, आफैलाई विसर्जित गर्नु । यो विसर्जित हुने क्रिया नै थोपा समुद्रमा विलीन हुने क्रिया हो । थोपा समुद्र बन्न सक्दैन । जुन थोपा एकपटक समुद्रमा मिल्न जान्छ, त्यसलाई फेरि तिमी अलग गर्न सक्दैनौ । समुद्रमा मिलेपछि त्यो थोपा पनि समुद्र बन्न जान्छ ।

योगको यसै भावभूमिमा म तिमीलाई बताइरहेको छु कि तिम्रो जीवन र मेरो जीवन अलग हुनै सक्दैन । मबिना तिम्रो जीवनको अस्तित्व छैन । मबिना तिम्रो जीवन जीवन होइन, त्यो विषयी जीवन त हुन सक्छ, तर प्राणको जीवन हुन सक्दैन किनकि तिम्रो जीवनको प्राण म हुँ, तिमीसित केवल शरीर छ र यस शरीरमा प्राणको चेतना मेरो माध्यमबाट प्राप्त हुन सक्छ किनकि म तिम्रो गुरु हुँ ।

...र, गुरु त्यसैले हुँ कि तिमीसित लिने भावना छैन । गुरु त्यसैले हुँ कि ममा आनन्द प्रदान गर्ने क्षमता छ । जति क्षण तिम्रो मसँग बित्नेछ, त्यो आनन्दको क्षण हुनेछ । तिमी मसामु आउँछौ र अत्यन्तै मस्तीसित रहन्छौ, खेल्छौ, हाँस्छौ, झुम्छौ, मुस्कुराउँछौ, तर फर्कने बेलामा अनुहारमा मुस्कुराहट हुँदैन, एक क्षण पनि सास लिन पाउँदैनौ, त्यसै बोझमा दबिरहन्छौ, त्यसैले कि तिमीसित जीवन नै थिएन । तिमीसित शरीर छ र त्यसमा म प्राण तत्त्वलाई जाग्रत गर्न सक्छु, चेतना दिन सक्छु । दिने कला ममा छ, **त्यसैले म तिम्रो गुरु हुँ** ।

र, यसका लागि योगको क्रिया छ, पूर्णरूपमा जोडिने क्रिया छ । शिष्यलाई यदि जोडिने क्रिया आउँछ भने आफै जहिले पनि जोडिन्छ । ऊ गुरु कहाँ आउन त सक्छ, गुरुको चरणमा झुक्न त सक्छ तर कसरी जोडिने ? यसबाहेक ऊ के गर्छ ? विश्वामित्रको

वशिष्ठले भनेका छन् कि ईश्वर छँदैछैन, ईश्वरको अस्तित्व नै छैन । जे छ, त्यो ब्रह्म हो र ब्रह्म बाहिर छैन । वेदमा स्पष्ट भनिएको छ–'अहं ब्रह्मास्मि'– आकाशमा ब्रह्म छैन, म स्वयं ब्रह्म हुँ । 'द्वितीयो नास्ति'– दोस्रो कुनै चीज नै छैन । जब तिमी यो ठान्छौ कि दोस्रो कुनै चीज नै छैन, तब मात्रै तिमी ब्रह्म बन्न सक्छौ ।

पनि यही प्रश्न थियो कि म के गरुँ ? कसरी गरुँ ? हजूर भनिरहनुभएको छ कि प्राण तत्त्वमा विसर्जित होऊ, म कसरी विसर्जित होऊँ ? यो कला मलाई थाहा छैन । थाहा भएको भए म पहिले नै विसर्जित भइसकेको हुन्थेँ । फेरि बारम्बार हजूरलाई दु:ख दिन्नथेँ, बारम्बार मृत्युलाई अङ्गाल्न बाध्य हुन्नथेँ, बारम्बार त्यस गर्भमा दु:ख उठाउँदिनथेँ ।

विश्वामित्रलाई गुरुले भने कि एउटा जन्ममा पनि हुन सक्छ र दोस्रो जन्म पनि लिनुपर्ने हुन सक्छ । तर दोस्रो जन्म लिन किन पर्छ ? परीक्षितले यही प्रश्न सोधका थिए वेद व्याससँग कि राधाले एउटै जीवनमा कसरी पूर्णता प्राप्त गरिन् ?

तिमी पनि जबसम्म झुक्दैनौ तबसम्म आफैलाई मेटाउन सक्दैनौ, तबसम्म तिमीले पनि जन्म लिनुपर्ने हुन्छ र जबसम्म जन्म लिइरहन्छौ, मलाई बारम्बार आफूकहाँ बोलाउनु पर्ने हुन्छ । तर यी सबै तिमी यस जीवनमा पनि गर्न सक्छौ, यसका लागि कुनै ठूलो घटनाको आवश्यकता पर्दैन, पाँच-दस वर्षको आवश्यकता पर्दैन, कुनै मन्त्र जपको आवश्यकता छैन । मन्त्रजपको माध्यमबाट प्राणमा समावेश सम्भव छैन । यदि सम्भव भएको भए हजारौँ लाखौँ मानिसहरू एक अर्काको प्राणमा समावेश हुन जान्थे होलान् । प्राणमा समावेश त विसर्जन हुने क्रिया हो ।

विश्वामित्र यही सोधिरहेका थिए कि म प्राणमा समावेश कसरी होऊँ ? किनकि म दोस्रो जन्म लिन चाहन्न । जीवनको जुन मोडमा म उभिएको छु जहाँ हजूरले मेरो हात समात्नुभएको छ, बस यहाँबाट मेरो जीवनको गोरेटो मोडिनुपर्छ, जीवनमा आनन्द आउनुपर्छ ।

...र, म तिमीलाई यही भनिरहेको छु कि म तिमीलाई आनन्द दिन चाहन्छु, सुख होइन । म तिमीलाई प्वाँख लगाइदिँदैछैन । सुखले त तिमीलाई पंगु बनाउला, रोगी बनाउला । तिमीलाई रोगग्रस्त हुनु छैन । मसानमा गएर सुत्नु आनन्द होइन । कृष्णले यसरी सुत्न पाएनन्, रामले यसरी सुत्न पाएनन्, बुद्धले त्यो क्रिया गरेनन्, महावीरले त्यो क्रिया गरेनन्, ईसामसीहले त्यो क्रिया गरेनन्, सुकरातले त्यो क्रिया गरेनन् । उनीहरू जाग्रत रहे, जीवित रहे किनकि जीवनको एउटा विशेष मोडमा उनीहरूले गुरुलाई समाते ।

बुद्धलाई पनि गुरु प्राप्त भयो र धम्मपदमा उनले यही भने कि कुन क्रियाबाट म लीन होऊँ ? बुद्धत्व प्राप्त हुने क्रिया के हो ? बुद्धत्वको अर्थ हो जहाँ बुद्धि समाप्त हुन जान्छ, जहाँ श्रद्धा उत्पन्न हुन्छ, अहंकारको अन्त, बुद्धिको अन्त– बुद्धत्व हो, चेतना हो, यहाँ प्राणमा पुग्ने क्रिया छ, विसर्जनको क्रिया छ, यो ध्यानमा डुब्ने क्रिया हो ।

मैले तिमीलाई प्राणमा डुब्नका लागि भनेँ भने पाँच वर्ष अभ्यास गरेर पनि तिमी डुब्न सक्दैनौ होला किनकि तिम्रो सारा जीवन विषय वासनामा लिप्त छ । बाहिरी जीवनको साठी वर्षको जुन भोग छ, त्यो तुरुन्तै सकिँदैन । सकिँदैन भने तिमी जुन गर्न सक्दैनौ त्यसलाई गुरुले गरिदिनुपर्ने हुन्छ किनकि गुरु तिम्रा हुन्, उनको जिम्मेवारी हो, गुरु जिम्मेवारीबाट बच्न सक्दैनन् । यदि जिम्मेवारीबाट बच्छ भने ऊ भगौडा हो, कायर हो । या त तिमी गुरुको प्राणमा विसर्जित हुन जाऊ, या त गुरुले नै तिमीलाई समातेर आफ्नो प्राणमा समावेश गरून् । दुवैमा एउटा क्रिया होस्, यो गुरुको जिम्मेवारी हो ।

यसैले म यो भन्दिन कि तिमीले एकै दिनमा बुद्धत्व प्राप्त गर्नेछौ । प्राणमा डुब्नका लागि ध्यान योगको जुन प्रक्रिया छ, त्यो लामो स्थितप्रज्ञ प्रक्रिया हो । समय थोरै मात्र छ । मैले तिमीलाई भनेँ कि ध्यानस्थ भएर भित्रै डुब्दै जाऊ, एउटा सिँढी, दोस्रो सिँढी, पाँचौँ सिँढी, दसौँ सिँढी– तब स्वयंमा तिमीलाई ब्रह्मत्वको दर्शन हुनेछ, दूधिया प्रकाश देख्नेछौ, तर यो त अभ्यासको कुरा भयो, एक दिनमा यो सम्भव छैन । बुद्धले भने कि मैले वर्षौंवर्ष तपस्या गरिसकेको छु, तर यतिका वर्षपछि पनि त्यस तत्त्वलाई प्राप्त गर्न सकिन जहाँबाट ब्रह्माण्डलाई निहार्न सकूँ । अर्जुनले पनि भनेका थिए– 'कृष्ण ! म तपाईंलाई चिन्दिन कि तपाईं को हुनुहुन्छ ? म त तपाईंलाई सारथी सम्झिरहेको छु । तपाईं यति ठूलठूला कुरा गरिरहनुभएको छ, मैले बुझ्न सकिरहेको छैन ।'

कृष्णले जवाफ दिए– 'तिमीले देख्न सकिरहेका छैनौ भने लौ हेर, म तिमीलाई आफ्नो विराट् रूप देखाइरहेको छु कि म को हुँ । मभित्र पूरा ब्रह्माण्ड छ, तिमी देख्न सक्छौ । यो पूरा महाभारत युद्ध बाहिर भइरहेको छैन, मभित्र भइरहेको छ । यो सारा युद्ध म गरिरहेको छु । यी कौरव मभित्र बसिरहेका छन्, पाण्डव मभित्र बसिरहेका छन्, भीष्म पितामह शरशैय्यामा मभित्रै छन् । तिमी सबै हेर, त्यसैले तिमी निमित्त बन ।'

यसैले, तिमीले देख्न सक्दैनौ भने गुरुको जिम्मेवारी हो कि उनले गरून् । यसैले अब पनि तिमी गान्डीव उठाउँदैनौ भने मैले तिम्रो हात समातेर उठाउनुछ, हातमा गाण्डीव दिनुछ र तीर हान्नका लागि तैयार गराउनुछ, तिमीलाई गर्नु नै छ भने सम्झाउनुछ । तब तिमीले देख्न सक्नेछौ कि सामु मञ्चमा बसेको व्यक्ति को हो भनेर ।

अहिले तिमी अलग बसेका छौ, म अलग्गै बसेको छु । म तिमीलाई सम्झाइरहेको छु र तिमी बुझिरहेका छौ । जब सुन्ने र सम्झाउने भाव नै सकिन्छ, देख्ने भाव नै सकिन्छ, द्वैत भाव नै सकिन्छ तब एकाकार हुन जान्छ ।

यसपटक तिमी यस जन्ममा मेरो सामु आएका छौ भने आफै आएका होइनौ, मैले तिमीलाई तानेको हुँ त्यसैले तिमी मकहाँ आउन सकेका छौ र यसपटक भने म तिमीलाई छोड्नेछैन । यसपटक तिमीलाई फँसाएको छु । आफ्नो प्रेमको डोरीमा फँसाएको छु, चतुऱ्याइँपूर्वक फँसाएको छु । मैले तिमीलाई मुक्त गराउन सक्छु भने फँसाउन पनि सक्छु, तिम्रो प्राणलाई बाँध्न पनि सक्छु, तिमी आफ्नो प्राणलाई मबाट अलग गर्न सक्दैनौ ।

जुन क्षण तिमी बाँचिरहेका छौ, त्यस क्षणमा छलांग लगाउन सक्छौ । तिमीलाई एक क्षणको आवश्यकता छ, एउटा हिम्मत र हौसलाको आवश्यकता छ । जब रामले हनुमान्‌लाई भने कि तिमीले सीताको समाचार ल्याउनुछ, तब सुग्रीव, नल, नील, जाम्बन्त र हनुमान् सबै समुद्रको किनारामा पुगे र लंकाको बीच चार सय योजन लामो समुद्रलाई तरेर त पार हुन सकिन्नथ्यो । जाम्बन्तले भने कि म वृद्ध भइसकेको छु, शरीर यति धेरै खिइसकेको छ कि उफ्रेर लंकामा उत्रन सक्दिन । किनारामा जान सक्दिन । नलले पनि भने कि ममा पनि यो क्षमता छैन, हनुमान्‌ले पनि भने कि म पनि गर्न सक्दिन । जाम्बन्तले भने– 'हनुमान् ! तिमी उफ्रन सक्छौ, तिमीलाई थाहा छैन कि तिमीमा कति क्षमता छ भनेर, तर मेरो अनुभवी आँखाले बताइरहेको छ कि तिमी उफ्रन सक्छौ ।'

र, म पनि तिम्रो हिचकिचाहटलाई जान्दछु, म स्वयं तिम्रो हात समातेर हाम फाल्न पनि सक्छु, जब म हाम फाल्छु तब तिमी आफ्ना कुण्ठाहरूबाट बाहिर आउनेछौ तब तिम्रो शरीर एउटा विशेष गन्धले सुवासित हुनेछ, तिम्रो आँखामा एउटा नवीन भाव हुनेछ, प्रेमको लालिमा हुनेछ, एउटा नृत्य हुनेछ, पूरा जीवन सजिएको हुनेछ, हात मोतिहरूबाट भरिएको हुनेछ । म तिमीलाई यस्तै आशीर्वाद दिन्छु ।

– **सद्‌गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यू (परमहंस स्वामी श्री निखिलेश्वरानन्दजी)**

# सर्वश्रेष्ठ पुरुषोत्तम महिना

**प्रत्येक तीन वर्षको अन्तरालमा पर्न आउने अधिक मासको सम्बन्धमा धेरै भ्रान्ति फैलिएको पाइन्छ । अधिक मासलाई अशुद्ध महिना अथवा मल मास पनि भन्ने गरेको पाइन्छ । वास्तवमा यो महिना सूर्य, चन्द्र एवं पृथ्वीको गतिको संयोजनको काल हो । मनुष्य शरीरलाई पृथ्वीस्वरुप मानिएको छ । सूर्य तेजस्विता र प्रखर व्यक्तित्वको स्वरुप हो तथा चन्द्रमा जीवनमा मन, मधुरता, आनन्द, शीतलता, भावनाको स्वरुप हो । जीवनमा यी तत्त्वहरुको सही समायोजन हुन जाँदा नै पुरुषबाट पुरुषोत्तम बन्ने क्रिया प्रारम्भ हुन्छ । पुरुषोत्तम भगवान् विष्णुको स्वरुप हो त्यसैले पनि यो महिना विष्णु र लक्ष्मीको साधना गर्ने उत्तम महिना हो । यस महिनामा दान, धर्म, तीर्थ यात्रा, उपासनाको विशेष महत्त्व रहेको छ ।**

## अधिक मासको धार्मिक विशेषता

महर्षि हेमाद्रिका अनुसार अधिक मासमा त्यो विशेषता हुन्छ कि मानिसले यस बेला पूजा साधना तपस्या इत्यादि सम्पन्न गरेर आफ्ना पूर्वजन्मकृत दोषहरूलाई निवारण गर्न सक्छन् । यस बेला दान, दया, त्याग, तप इत्यादिद्वारा जीवनमा शारीरिक एवं मानसिक शुद्धता ल्याउन सक्छन् । पुराणमा वर्णित एउटा कथाअनुसार राजा नहुषले मल मासमा साधना सम्पन्न गरेर सबै स्थितिहरूबाट मुक्त भएर देवताहरूका अधिपति इन्द्रको सिंहासन प्राप्त गरेका थिए ।

देवीभागवत्का अनुसार मल मासमा विशिष्ट पूजा, धार्मिक कार्य, साधना इत्यादि गर्नेलाई विशेष फल प्राप्त हुन्छ । देवीभागवत्मा यहाँसम्म लेखिएको पाइन्छ कि जसरी एउटा अणुजत्रो बीजले विशाल वृक्षको रूप लिन्छ, त्यसरी नै अधिक मासमा गरिएका थोरै शुभ कार्य, पूजा साधना पनि महान् फल दिने हुन्छ । अधिक मासलाई पुरुषोत्तम मास किन भनियो भन्ने सम्बन्धमा पुराणमा एउटा यस्तो सुन्दर कथा पाइन्छ–

चन्द्र वर्षअनुसार प्रत्येक वर्षमा १२ महिना हुन्छन् तथा प्रत्येक महिना एक देवतालाई समर्पित छ । तर चन्द्र वर्ष र सूर्य वर्षको आपसमा गतिको संयोजन नहुनाले ऋषिमुनिहरूले गणना गरेर एउटा अधिक मासको निर्माण गरे । ब्रह्माले प्रत्येक महिनाको एक अधिपति निश्चित गरे । तर अधिक मासलाई कुनै देवताले वरण गरेनन् किनकि यो प्रत्येक तीन वर्षमा एकपटक आउँछ । यसबाट अधिक मास पुरुषरूपमा दुःखी एवं सन्तप्त भएर भगवान् विष्णुसमीप पुगे र भने– मलाई कुनै पनि देवतासँग संयुक्त गरिएको छैन र मल मास, मलिमुच्छाको नामले सम्बोधित गरिन्छ । यसकारण म अत्यन्तै दुःखी र सन्तप्त छु तथा हजूरको शरणमा आएको छु । हजूर नै जगत्का पालक र सृष्टिलाई चलाउने हुनुहुन्छ । हजूरसँग निवेदन छ कि मेरो लागि पनि उचित व्यवस्था गर्नुहोस् ।

भगवान् विष्णुलाई अत्यन्तै दया लाग्यो र उहाँले अधिक मासलाई भन्नुभयो– तिम्रो अधिपति म स्वयं हुन्छु र तिमीलाई पुरुषोत्तम मास भनिनेछ, तिम्रो विशेषता अन्य सबै महिनाहरूको भन्दा धेरै हुनेछ तथा पुरुषोत्तम महिनामा राम्रा कार्य सम्पन्न गरेर विशेष सिद्धि प्राप्त गर्न सकिनेछ । पुरुषोत्तम मासको सम्बन्धमा त पूरा ग्रन्थ नै लेखिएको छ जसमा यस महिनाको धार्मिक, आध्यात्मिक महत्त्वलाई लिएर विशेष व्याख्या गरिएको पाइन्छ ।

भविष्योत्तर पुराणमा यस्तो विवेचना गरिएको पाइन्छ कि पुरुषोत्तम मासमा उपवास अथवा व्रत शुक्ल पक्षको प्रथम दिनमा प्रारम्भ गर्नुपर्छ र कृष्ण पक्षको अन्तिम दिनमा पूर्ण गर्नुपर्छ ।

पुराणहरूमा त अधिक मासको बारेमा अत्यधिक विस्तारले विवेचना गरिएको छ । पुराणका अनुसार अधिक मासमा पूजा गर्नाले, श्रेष्ठ ग्रन्थको अध्ययन गर्नाले फल प्राप्ति अवश्य नै हुन्छ । अधिक मास विष्णु एवं लक्ष्मीको पूजाको महिना हो । यस महिनामा ब्रह्ममुहूर्तमा उठेर राधा-कृष्ण, लक्ष्मी-नारायणको षोडषोपचार पूजन सम्पन्न गर्नुपर्छ । यदि नजिकै कुनै मन्दिर छ भने विभिन्न देवताहरूका पूजा साधना अवश्य सम्पन्न गर्नुपर्छ । यस महिनामा सात्त्विक भोजन, शाकाहारी भोजन, दूध, फल, वनस्पति, फलाहार, नरिवल इत्यादिको सेवन गर्नुपर्छ ।

भविष्योत्तर पुराणमा लेखिएको छ कि भगवान् श्रीकृष्ण स्वयं भन्नुहुन्छ कि अधिक मासमा केवल भगवत् साधना गर्ने उद्देश्यले गरिएका साधनाले लौकिक एवं पारलौकिक दुवै नै फल प्राप्त हुन्छ । मनुष्य आफ्नो जीवनमा लौकिक दृष्टिले विशेष सफलता प्राप्त गर्दछ तथा अपघात, दुर्घटना, आकस्मिक मृत्यु, दुःख, चिन्ता, दुर्भाग्यको निवारण हुन्छ ।

जय गुरुदेव !

# अधिक मास–ज्योतिषीय विवेचना

ज्योतिष शास्त्रमा चन्द्र पञ्चाङ्गको प्रमुखता रहेको छ र चन्द्र पञ्चाङ्गमा हरेक तीन वर्षमा एक महिना अधिक हुन जान्छ। जसरी चन्द्र मासमा अधिक महिना हुन्छन्, त्यसरी नै चन्द्रमासमा कैयौँपटक एक महिना कम पनि हुन जान्छ जसमा केवल ११ महिना मात्र हुन्छ । तर यस्तो चन्द्र वर्ष जसमा केवल ११ महिना मात्रै हुन्छ, आफैमा एउटा अनौठो घटना मानिन्छ । यो घटना १४० वर्ष वा १९० वर्षमा एकपटक घटित हुन्छ । तर अधिक मास हरेक तीन वर्षमा आउँछ किनकि सामान्यत: १२ महिनामा एक महिना बढ्न जान्छ । यसैले यसलाई अधिक मास भनिन्छ ।

ज्योतिष शास्त्रअनुसार जुन महिनामा सूर्य सङ्क्रान्ति आउँदैन त्यस महिना अधिक मास बन्छ । वशिष्ठ सिद्धान्तमा स्पष्ट गरिएको पाइन्छ कि अधिक मास प्रत्येक ३२ महिनामा १६ दिन ११ घडी (१ घडी बराबर २४ मिनेट तथा ६० घटी बराबर २४ घण्टा हुन्छ) बाट प्रारम्भ हुन्छ । सूर्य विज्ञानको सिद्धान्तअनुसार प्रत्येक सूर्य वर्ष ३६५ दिन र ६ घण्टाको हुन्छ र चन्द्र वर्ष ३५४ दिनको हुन्छ । यसको तात्पर्य यो हो कि पृथ्वीले ३६५ दिन र ६ मिनेटमा सूर्यको १ परिक्रमा पूरा गर्छ । यसप्रकार सूर्य वर्ष र चन्द्र वर्षमा ११ दिन १ घण्टा ३१ मिनेट १२ सेकेण्डको अन्तर हुन्छ । प्रतिवर्ष यो अन्तर बढ्दै जान्छ । यसप्रकार करिब ३ वर्षमा (३२-३३ महिना) मा एक महिना बराबर हुन जान्छ ।

यो कुरा सबैलाई ज्ञात छ कि चन्द्रमाले पृथ्वीको परिक्रमा गर्छ तथा यसले पृथ्वीको परिक्रमा २७.३ दिनमा पूरा गर्छ । पृथ्वीले २९.७९ किमी प्रति सेकण्डको गतिले हिँडेर ३६५.२४२२ दिनमा सूर्यको परिक्रमा पूर्ण गर्दछ ।

यसको अर्थ हो– एउटा पूर्णिमाबाट अर्को पूर्णिमासम्म चन्द्रमाले २.२ दिनसम्म अतिरिक्त भ्रमण गर्नुपर्छ । यसको कारण यो हो कि पृथ्वीले आफ्नो वक्र कक्षमा सूर्यको चारैतिर चक्कर लगाउँछ । चन्द्रमा धर्तीको चारैतर्फै एउटा पूर्ण कक्ष भ्रमण २७.३ दिनमा गर्छ र तर धर्ती र सूर्यका साथ एउटा सीधा रेखामा आएर पूर्ण चन्द्रमा बनाउनका लागि चन्द्रमाको लागि २९.५३१ दिन लाग्छ । एउटा चन्द्र महिनामा २९.५३१ दिन हुन्छ र जसबाट १२ महिनामा चन्द्र वर्षमा ३६५.२४२२ दिन हुन्छ । यसप्रकार प्रति चन्द्र वर्ष एवं सूर्य वर्षका बीच करीब १०.७९ दिनको अन्तर हुन्छ ।

यसकारण यस अन्तरलाई पूर्ण गर्नका लागि करिव ३२-३३ महिनामा ऋषिहरूले एउटा अतिरिक्त महिनाको गणना गरे जसलाई अधिक मास भनिन्छ ।

*(परमपूज्य सद्गुरुदेव श्री शिव गोरक्षसम्बन्धी विभिन्न सत्य तथ्य कुराहरूको बारेमा जानकारी दिने क्रममा श्री सावर संरचना शक्ति केन्द्र नेपालद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा लिखित 'श्री शिव गोरक्ष-नाथंप्रदाय' ग्रन्थबाट विभिन्न प्रसंगहरू क्रमश: प्रकाशित गर्दै आइरहेका छौँ ।)*

# श्री शिव गोरक्ष-नाथंप्रदाय

### गुरू मत्स्येन्द्रनाथ र नाथ सम्प्रदाय

भगवान् आदिनाथबाट नाथ सम्प्रदायको शुरुआत भई अन्य विभिन्न कालखण्डका नाथ महायोगीहरूको अतुलनीय एवं अवर्णनीय योगदानले अगाडि बढिरहेको पाइन्छ। भगवान् आदिनाथपछि नाथ मार्गको सिद्ध परम्परामा महायोगी मत्स्येन्द्रनाथ (मच्छिन्द्रनाथ) को नाम आउँछ । नाथ सम्प्रदायमा गुरु मत्स्येन्द्रनाथलाई आदिनाथ भगवान्को प्रिय शिष्यको रूपमा लिइन्छ । महायोगी, महाज्ञानी, महातपस्वी, महाचमत्कारी योगीराज मत्स्येन्द्रनाथले भगवान् आदिनाथबाट नै नाथ योग दीक्षा प्राप्त गर्नुभएको थियो । मत्स्येन्द्रनाथका उत्पत्ति प्रसङ्गहरूमध्ये धेरैजसो विद्वान्हरूले निम्न प्रसङ्गलाई बढी व्याख्या गरेका छन्–

### गुरू मत्स्येन्द्रनाथको उत्पत्ति प्रसङ्ग

स्कन्दपुराणको ब्रह्मा-संवादमा गुरु मत्स्येन्द्रनाथको अवतारको वर्णन पाइन्छ जसअनुसार कुनै ब्राह्मणको परिवारमा एक दिव्य बालकको जन्म भएको थियो तर उक्त बालक गण्डान्त नक्षत्रमा जन्मेको कारण अनिष्टकारी हुन्छ, यस्तो बालकले सारा घर परिवारलाई नै अनिष्ट गर्छ भनी ब्राह्मणले उक्त बच्चालाई समुद्रमा लगी फालिदिए । समुद्रमा ठूलो माछाले उक्त बच्चालाई निल्यो तर भाग्यवश ईश्वरीय चमत्कारद्वारा उक्त बच्चा माछाको पेटमा जीवित नै रहे । केही समयपश्चात् भगवान् शिवले माता पार्वतीलाई अति गोप्य अमरकथा महाज्ञान सुनाउन त्यही समुद्रमा आउनुभयो । भगवान् शिवले त्यो एकान्त स्थानमा पार्वतीलाई अमरकथा सुनाउन लाग्नुभयो । कथा सुन्दासुन्दै माता गौरी योगनिद्रामा लीन हुनुभयो । बच्चा पेटमा भएको उक्त माछा सागरतटतर्फ आई हुङ्कारको आवाज दिँदै भगवान् शङ्करले दिनुभएको महाज्ञान आनन्दले सुन्दै गयो र माछाको पेटभित्रको ब्राह्मणपुत्रले महादेवले सुनाउँदै गर्नुभएको कथा सुन्दै गए । सम्पूर्ण अमरकथा सकिएपछि महादेवले पार्वतीलाई हेर्दा उहाँलाई योगनिद्रामा देख्नुभयो र हुङ्कार गरेको बालकलाई बाहिर आउन आदेश दिनुभयो । तत्पश्चात् माछाको पेटभित्रबाट ब्राह्मण बालक बाहिर आई भगवान् शिवलाई प्रणाम गरी शरणमा परे ।

त्यसपछि भगवान् शिवले, "हे पार्वती ! यी बालक तिम्रा पुत्र हुन् र यिनी सर्वदा प्रसन्नचित्त हुनेछन्, यिनलाई संसारमा कसैले पनि पराजित गर्न सक्दैन ।" 'मत्स्य' आर्थात् माछाको पेटबाट निस्कनुभएको हुनाले उहाँको नाम मत्स्येन्द्रनाथ रहन गयो । यसरी मत्स्येन्द्रनाथले भगवान् शिवद्वारा सम्पूर्ण महाज्ञान प्राप्त गरी योगसिद्ध हुनुभयो । भगवान् शिवले 'अब तिमीले योगविद्याको विस्तार गर्नू, सिद्ध मार्ग नाथ मार्गको व्यापकरूपमा विकास र विस्तार गर्नू' भन्ने आदेश दिनुभयो । गुरु मत्स्येन्द्रनाथले भगवान् आदिनाथको आदेशलाई शिरोधार्य गरी नाथ मार्ग अर्थात् नाथ सम्प्रदायको विश्वभर प्रचारप्रसार गर्नुभयो । यसरी आदिनाथप्रदत्त महाज्ञान योगीराज मत्स्येन्द्रनाथले प्राप्त गरी विभिन्न ठाउँमा घुमी, विभिन्न व्यक्तित्वहरू निमार्ण गर्दै नाथ सम्प्रदायको प्रचारप्रसार गर्नुभयो ।

नाथ सम्प्रदाय ज्यादै पुरानो सिद्ध मार्ग भएकोले सम्पूर्ण

सिद्धहरू यसैअन्तर्गत पर्ने सत्यतालाई एकै स्वरले मानिँदै आएको छ । यसै प्रवाहको शृंखलालाई महायोगीराज गुरु मच्छिन्द्रले जीवान्तता दिनुभयो । थुप्रै ग्रन्थहरूका रचयिता श्री गुरु मच्छिन्द्रनाथ विभिन्न संघ, सम्प्रदाय एवं ठाउँहरूमा विभिन्न नामले पूजित, सम्मानित एवं आदरणीय हुनुहुन्छ । विभिन्न धर्मावलम्बीहरूले पनि श्री गुरु मच्छिन्द्रनाथलाई पृथक् नाम र पृथक् स्वरूपमा ज्यादै आदर, सम्मानका साथ आफ्ना आराध्यदेवको रूपले पूज्ने गरेको पाइन्छ । गुरु मच्छिन्द्रनाथको बारेमा अगाडि अझै बढी प्रसङ्गका साथ चर्चा गर्नेछौँ । करुणामयी देवताका रूपमा सर्वत्र पूजित गुरु मच्छिन्द्रनाथले आफ्नो योगज्ञानको प्रचारप्रसार गरी समाजमा अतुलनीय योगदान दिनुभयो ।

सारा देश-विदेश भ्रमण गरी आदिनाथप्रदत्त महाज्ञानलाई बाँड्दाबाँड्दै एकदिन श्री गुरु मच्छिन्द्रनाथलाई लामो समयसम्म समाधिमा जान मन लाग्यो । आदिनाथ भगवान् शिवको आज्ञालाई शिरोधार्य गरी आफ्नो जिम्माको कार्य गर्नुभएका योगीराज मच्छिन्द्रले भगवान् आदिनाथसँग यसरी आदिनाथ भगवान्ले आफ्नो प्रिय शिष्यको रूपमा स्वीकार गरी दीक्षित गरी सम्पूर्ण महाज्ञान प्रदान गरी संसारको कल्याणको लागि जिम्मा दिइसकेपछि गुरु मत्स्येन्द्रनाथले नाथ सम्प्रदायको विकासको लागि थुप्रै कार्यहरू गर्नुभएको छ । विभिन्न गूढ शास्त्रको रचना, विभिन्न शिष्यहरूको निर्माण आदि अनन्त कार्यहरू रहस्यमय लीलाका साथ भएका छन् । भगवान् आदिनाथले बनाउनुभएको नवनाथपश्चात् गुरु मत्स्येन्द्रनाथले नै पुन: अन्य नवनाथहरूको निर्माण गर्नुभएको पाइन्छ । हुन त गुरु मत्स्येन्द्रनाथले जब सारा संसारमा योग ज्ञानको प्रचार गर्नुभयो, नाथ पन्थलाई जीवन्तता दिनुभयो, तब पनि आफूले खोजेजस्तो शिष्य निर्माण गर्न सक्नुभएन । त्सपछि उहाँले पुन: भगवान् आदिनाथको तपस्या गर्न लाग्नुभयो । भगवान् आदिनाथ खुशी भई 'ल, वर माग' भन्नुहुँदा गुरु मत्स्येन्द्रनाथले 'हजूरले प्रदान गर्नुभएका यी समस्त गूढ ज्ञान, महाज्ञान, समस्त सिद्धि, शक्ति आदि ग्रहण गर्ने योग्य शिष्य मैले प्राप्त गर्न सकिन । अत: मलाई समाधिमा जान इच्छा छ । हजूरले दिनुभएका समस्त ज्ञान हजूर नै मेरो सहायक भई आएर प्राप्त गरी बाँकी कार्य हजूरले नै सम्हालिदिनु पर्‍यो' भनी वर माग्नुभयो । भगवान् आदिनाथ मत्स्येन्द्रनाथको शिष्य बनी आउनुभयो । क्रमश: जय गुरुदेव !

## ।। ॐ नमः निखिलेश्वर्यायै ।।

ॐ नमः निखिलेश्वर्यायै कल्याण्यै ते नमो नमः ।
नमस्ते रुद्र रूपिण्यै ब्रह्म मूर्त्यै नमो नमः ।।१।।
नमस्ते क्लेश हारिण्यै मंगलायै नमो नमः ।
हरति सर्व व्याधिनां श्रेष्ठ ऋष्यै नमो नमः ।।२।।
शिष्यत्व विष नाशिन्यै पूर्णतायै नमोस्तुते ।
त्रिविध ताप संहर्त्यै ज्ञान दात्र्यै नमो नमः ।।३।।
शान्ति सौभाग्य कारिण्यै शुद्ध मूर्त्यै नमोस्तुते ।
क्षमावत्यै सुधावर्त्यै तेज वर्त्यै नमो नमः ।।४।।
नमस्ते मन्त्र रूपिण्यै तन्त्र रूप्यै नमोस्तुते ।
ज्योतिषं ज्ञान वैराग्यं पूर्ण दिव्यै नमो नमः ।।५।।
य इदं पठतिं स्तोत्रं श्रृणुयाद् श्रृद्धयान्वितं ।
सर्व पाप विमुच्यन्ते सिद्धयोगिश्च संभवे ।।१।।
रोगस्थो रोग तं मुच्येत् विपदा त्राणया दपि ।
सर्व सिद्धि भवेदस्य दिव्य देह श्च संभवे ।।२।।
निखिलेश्वर्य पंचकं य नित्यं यो पठते नरः ।
सर्वान् कामान मवाप्नोति सिद्धाश्रमो च वाप्नुयात् ।।३।।

– किंकर स्वामी

# मुद्रा विधि

### धारावाहिक अभ्यास भाग ६

ध्यानको छैटौँ विधि मुद्रा विधि रहेको छ । मुद्रा भन्नाले हातका औँलाहरूबाट गरिने संकेतलाई बुझ्न सकिन्छ ।

यस विधिमा हातका औँलाहरूको प्रयोग गरी संकेत बनाइन्छ जसको कारणले ब्रह्माण्डबाट दिव्य रश्मिहरू तान्नलाई सजिलो हुन्छ । हुन त बाहिरी संसारमा पनि हामीले हातका हाउभाउले धेरै कुरा गरिरहेका हुन्छौँ । आवाज नसुनिने ठाउँमा हातका इशाराले बोलाउने गर्छौं । नजाने भए हात हल्लाएर नजाने संकेत गर्छौं । आध्यात्मिक क्षेत्रमा अर्थात् ध्यानको संसारमा पनि मुद्राको आफ्नै विशेष महत्त्व रहँदै आएको छ । मुद्राको प्रयोग गरी सहजरूपमा दैवी कृपा, आशीर्वाद दिव्य रश्मिहरू हामीले प्राप्त गर्न सक्दछौं ।

यहाँ प्रयोग गरिने मुद्राको नाम 'ब्रह्म मुद्रा' हो । ब्रह्म मुद्रा सृष्टिकर्ता ब्रह्मासँग सम्बन्धित छ । यसैले यस मुद्रामा बसेर ध्यान गर्नाले हामीलाई सृष्टि गर्न सक्ने क्षमता प्राप्त हुन्छ । त्यसो भनेर संसार नै सृष्टि गर्ने भनेको चाहिँ होइन । कुनै नयाँ विचार जन्मनु पनि आफैमा सृष्टि हो । सृष्टिको अर्थ धेरै विशाल र व्यापक रहेको पाइन्छ, यस विधिको प्रयोगबाट व्यक्तिमा creative mind को विकास हुन्छ, आफ्नो कार्यमा पनि नयाँ-नयाँ विचार, जुक्ति एवं कार्यशैलीमा पनि नयाँ-नयाँ शैलीको विकास हुने गर्दछ ।

यस मुद्राको प्रयोगले सिर्जनशीलताको विकास हुन्छ । नयाँ सिर्जना गर्ने क्षमताको वृद्धि हुन्छ । नयाँपन, नयाँ शैलीको विकास हुन्छ । यसरी नसोचेका विचारहरूको सृष्टि हुने, आफैले गरेका कार्यहरूमा पनि नयाँ प्रविधि, नयाँ शैलीका विचारहरूको सिर्जना हुने गर्दछ । जो जुन क्षेत्रमा लागेको छ, उसलाई त्यही क्षेत्रको बारेमा नयाँ-नयाँ ज्ञान प्राप्त हुन थाल्दछ ।

ब्रह्म मुद्रालाई ज्ञान प्रस्फुटनको मुद्राको रूपमा व्याख्या गरिएको पाइन्छ, कारण यस मुद्राले हामीलाई हाम्रो कार्यसम्बन्धी एवं अन्य विषयसम्बन्धी ज्ञान हासिल हुन्छ, ज्ञान प्राप्त हुन्छ ।

हाम्रा पूर्वज ऋषिमुनिहरूले पनि यस मुद्रामा बसेर ध्यान गरेको पाइन्छ, यही मुद्रामा समाधिमा बसेको पाइन्छ । ब्रह्म मुद्राको अवर्णनीय फाइदा त आफ्नो ठाउँमा छँदैछ तर तपाईं हामीले पनि यसको अभ्यास गरी फाइदा लिनेतर्फ लागौं ।

## तरीका :

१. अनुकूल मिल्ने वस्त्र लगाउने, भएमा सल, मालाहरू लगाउने ।

२. धेरै समय बस्दा अप्ठ्यारो लाग्ने आसनमा नबसी सजिलो लाग्ने, अनुकूल हुने सुखासन, अर्धपद्मासन वा अन्य आसनमा बस्न सकिनेछ ।

३. आफ्नो अगाडि गुरुहरूको फोटो, वा आफूले मानी आएका देवीदेवता वा इष्टहरूको फोटो राख्ने, अगरबत्ती बाल्ने, अनुकूल भए दीयो बाल्ने ।

४. सहस्रारमा परमपूज्य सद्‌गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई गुरुरूपमा धारण गर्ने, हृदयमा आफूले मानेका देवीदेवताहरूलाई धारण गर्ने ।

५. तीनपटक ॐकार गर्ने र तलको श्लोक तीनपटक उच्चारण गर्ने-

'गुरुर्ब्रह्मा गुरुर्विष्णु: गुरुर्देवो महेश्वर:<br>
गुरु: साक्षात् परब्रह्म तस्मै श्री गुरवे नम: ॥'

६. त्यसपछि दुवै हात रगडेर आँखा सेक्ने र आफ्नो अगाडि ढोगिदिने ।

७. ब्रह्म मुद्रमा बस्ने । ब्रह्म मुद्रा भन्नाले बायाँ हातको

हत्केलामाथि दायाँ हातको हत्केला पर्ने गरी राख्ने र दुवै बूढी औँला एक आपसमा जोड्ने । त्यसपछि नाभिनेर राख्ने ।

८. ब्रह्म मुद्रामा बसी २१ पटक ॐकार उच्चारण गर्ने ।

९. ब्रह्म मुद्रालाई सम्झेर ध्यान गर्ने ।

१०. आफ्नो अनुकूलताअनुसार १५ मिनेटदेखि ३०, ४५, ६० मिनेटसम्म गर्न सकिनेछ ।

११. तीनपटक ॐकार उच्चारण गर्ने ।

१२. तीनपटक तलको श्लोक उच्चारण गरेर भन्न-

'गुरुर्ब्रह्मा गुरुर्विष्णु: गुरुर्देवो महेश्वर:

गुरु: साक्षात् परब्रह्म तस्मै श्री गुरवे नम: ॥'

१३. दुवै हात रगडेर शिरमा सेक्ने, आँखामा सेक्ने, घाँटीमा सेक्ने, छातीमा सेक्ने, नाभिमा सेक्ने, पुन: दुवै हात रगडेर आँखा सेक्ने, आफ्नो हत्केला हेर्दै अगाडि ढोगिदिने । जय गुरुदेव !

ध्यानसम्बन्धी विस्तृत जानकारीको लागि **ध्यानामृत** तथा **मुद्रामृत ध्यान** पुस्तक खोजी-खोजी पढौँ ।

मन्त्र तन्त्र यन्त्र विज्ञानसम्बन्धी
नेपालकै पहिलो रेडियो कार्यक्रम

## गोरक्ष निखिल सन्देश

gnsandesh@ssk.org.np

| स्थान | समय (बिहान) | स्टेशन | मेगाहर्ज |
|---|---|---|---|
| पोखरा | सोमबार ५:०५–५:४५ | माछापुच्छ्रे FM | ९१ |
| चितवन | सोमबार ५:००–५:४० | कालिका FM | ९५.२ |
| धनगढी | सोमबार ५:३०–६:०० | दिनेश FM | ९३.८ |
| सुर्खेत | शनिबार ५:१५–५:४५ | रेडियो भेरी FM | ९८.६ |
| गोरखा | सोमबार ५:००–५:३० | रेडियो गोरखा FM | ९२.८ |
| भैरहवा | बिहीबार ५:००–५:४५ | रूपन्देही FM | १०२ |
| दाङ घोराही | बिहीबार ५:३०–६:०० | रेडियो मध्यपश्चिम FM | ९१.४ |
| पाल्पा | बिहीबार ५:००–५:३० | रेडियो मुक्तिनाथ FM | ९०.८ |
| सिन्धुली | बिहीबार ५:००–५:३० | सिन्धुलीगढी FM | १०३.६ |
| दाङ लमही | शुक्रबार ५:३०–६:०० | रेडियो देउखुरी FM | १०५.८ |
| पोखरा | बिहीबार ५:३०–६:०० | रेडियो सराङ्कोट FM | १०४.६ |
| दमौली | बिहीबार ५:२५–५:५५ | दमौली FM | ९४.२ |
| कोहलपुर | बिहीबार ५:३०–६:०० | कोहलपुर FM | १००.२ |
| चितवन | सोमबार ५:००–५:४० | त्रिवेणी FM | १००.६ |
| दमौली | बुधबार ५:०५–५:३५ | मादीसेती FM | १०५.८ |
| सल्यान | बिहीबार ५:००–५:३० | रेडियो सल्यान FM | १०१ |
| दमौली | बुधबार ५:१०–५:३० | रेडियो तनहूँ FM | ९७.२ |

# हार्दिक आमन्त्रण

**सिद्धाश्रम शक्ति केन्द्रको आयोजनामा सम्पन्न हुन लागेको सातौं रोट महोत्सवमा सहभागी भई पुण्य आर्जन गर्नुहुन हार्दिक अनुरोध गर्दछौं ।**

**मिति: २०६७ जेठ १३ देखि २३ गतेसम्म।**

## गोरखा जाऔं, रोट महोत्सव सफल पारौं ।

*नोट: नगद एवं जिन्सी सहयोग गरी पुण्यलाभ गर्न चाहनुहुनेले नजिकको सम्पर्क कार्यालयमा सम्पर्क राख्नुहोला ।*

*यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार हस्तरेखासम्बन्धी जानकारीहरु पाठकवर्गसमक्ष राख्दै आइरहेका छौँ। आशा छ, यसबाट यहाँहरु लाभान्वित हुनुहुनेछ।*



# आफ्नो हात आफै हेरौँ

## मस्तिष्क रेखा *अघिल्लो अंकबाट क्रमशः*

६४. यदि मस्तिष्क रेखा हातको बीचमा समाप्त हुन्छ भने त्यो व्यक्ति पागल हुन्छ।

६५. यदि यो रेखा केही अगाडि गएर आफैतिर फर्कन्छ भने त्यो व्यक्तिको प्रेममा दु:खद अन्त्य हुन्छ।

६६. यदि यो मस्तिष्क रेखा भाग्य रेखाको वरिपरि वा नजिकै गएर समाप्त हुन्छ भने त्यो व्यक्तिको मृत्यु पच्चीस वर्षभन्दा अगाडि नै हुन्छ।

६७. यदि यो रेखा बुध पर्वतमा गएर अन्त्य हुन्छ भने त्यो व्यक्ति व्यवस्थित कार्य गर्ने खालको हुन्छ। यदि यो रेखाको अन्त्य मंगल पर्वतमा गएर हुन्छ भने त्यो व्यक्तिलाई मस्तिष्कसम्बन्धी कठिनाइहरू जस्तै: चिन्ता, तनाव आदि हुन्छ।

६८. यदि यो रेखा छोटाछोटा रेखाहरूमा बाँडिएको छ भने त्यो व्यक्ति अत्यधिक घमण्डी हुन्छ।

६९. यदि यो रेखा सूर्य क्षेत्रको मुनि गएर टुट्दछ भने त्यो व्यक्ति व्यक्तिको मृत्यु हिंस्रक पशुको आघातबाट हुन्छ।

७०. यदि मस्तिष्क रेखा र जीवन रेखा मिलेर न्यूनकोण बनाउँछ भने त्यो व्यक्ति राज्य सेवामा अत्यन्त उच्च पदमा पुग्दछ।

७१. यदि यो रेखा जीवन रेखासँग मिलेर हृदय रेखातिर जान्छ भने त्यो व्यक्ति अन्धो हुन्छ।

७२. यदि मस्तिष्क रेखा र स्वास्थ्य रेखा दुवैको अन्तिम छेउमा क्रस चिन्ह छ भने त्यो व्यक्ति मस्तिष्क रोगले ग्रसित हुन्छ।

७३. यदि मस्तिष्क रेखा र हृदय रेखा दुवै टुटेका छन् भने त्यो व्यक्तिको गृहस्थ जीवन सुखी हुन्छ।

७४. यदि स्वास्थ्य रेखा र मस्तिष्क रेखा दुवै लहरादार छन् भने त्यो व्यक्तिको स्वास्थ्य अत्यन्त कमजोर हुन्छ।

७५. यदि हातको मध्यमा यो रेखा हृदय रेखासँग मिल्दछ भने त्यो व्यक्तिको जीवन शस्त्र भययुक्त हुन्छ।

७६. यदि कुनै अन्य रेखाले मस्तिष्क रेखालाई काट्दछ भने त्यो व्यक्ति मानसिकरूपमा कमजोर हुन्छ।

७७. यदि मस्तिष्क रेखा टुटेको छ र यसको साथमा अन्य रेखाहरू पनि छन् भने त्यो व्यक्ति पागल हुन्छ।

७८. यदि कुनै रेखा शुक्र पर्वतबाट निस्केर मस्तिष्क रेखालाई काट्दछ भने त्यो व्यक्तिको गृहस्थ जीवन बर्बाद हुन्छ।

७९. यदि मस्तिष्क रेखाबाट शाखा रेखाहरू निस्केर शुक्र पर्वततिर जान्छन् भने त्यो व्यक्तिको प्रेम जीवनभरि गुप्त रहन्छ।

८०. यदि यो रेखाबाट कुनै सहायक रेखा निक्लेर गुरु पर्वततिर जान्छ भने त्यो व्यक्ति किराना व्यापारी हुन्छ।

८१. यदि यो रेखाबाट कुनै सहायक रेखा निक्लेर शनि पर्वततिर जान्छ भने त्यो व्यक्ति उच्चकोटिको धार्मिक हुन्छ।

८२. यदि यस रेखाबाट कुनै सहायक रेखा निक्लेर सूर्य

पर्वततिर जान्छ भने त्यो व्यक्तिलाई आकस्मिक धन लाभ हुन्छ ।

८३. यदि यस रेखाबाट कुनै सहायक रेखा निक्लेर बुध पर्वततिर जान्छ भने त्यो व्यक्ति लखपति हुन्छ ।

८४. यदि यस रेखाको अन्त्यमा रेखाहरूको गुच्छा छ भने त्यो व्यक्ति कुटिल, झूटो र चलाख हुन्छ ।

८५. यदि शनि पर्वतको मुनि यस रेखामा सेता धब्बाहरू छन् भने त्यो व्यक्ति आर्थिक दृष्टिले सबल हुन्छ ।

८६. यदि सूर्य पर्वतको मुनि यस रेखामा सेतो धब्बा छ भने त्यो व्यक्तिले राष्ट्रव्यापी सम्मान पाउँछ ।

८७. यदि बुध पर्वतमुनि यस रेखामा सेतो धब्बा छ भने त्यो व्यक्ति करोडपति हुन्छ ।

८८. यदि मंगल पर्वत बलवान् छ र यस रेखाको अन्तमा त्रिकोण बनेको छ भने त्यो व्यक्तिले जीवनमा कसै न कसैको हत्या गर्दछ ।

८९. यदि यो रेखामा कतै रक्तिम धब्बा छ भने त्यो व्यक्तिको शिरमा चोट लागेर मृत्यु हुन्छ ।

९०. यदि यो रेखामा कतै निलो धब्बा छ भने त्यो व्यक्ति जीवनमा अपराधी मनोवृत्तिको हुन्छ ।

९१. यदि यो रेखा चोरी औंलाको मूलसम्म पुगेको छ भने त्यो व्यक्ति जीवनमा असफल हुन्छ ।

९२. यदि यो रेखा मध्यमा औंलामा चढेको छ भने त्यो व्यक्तिको डुबेर मृत्यु हुन्छ ।

९३. यदि यो रेखा साहिँली औंलाको मूलमा पुगेको छ भने त्यो व्यक्ति प्रसिद्ध तान्त्रिक हुन्छ ।

९४. यदि यो रेखा कान्छी औंलामा चढेको छ भने त्यो व्यक्तिको सन्निपातले मृत्यु हुन्छ ।

९५. यदि यो रेखा सबै दृष्टिबाट दोषमुक्त छ भने त्यो व्यक्तिको चुम्बकीय व्यक्तित्व हुन्छ ।

क्रमश:



# २०६७ वैशाख महिनाका शुभ समयहरू

| वैशाख ५, १२, १९, २६ गते (आइतवार) |
|---|
| **सर्वश्रेष्ठ– दिन** ६:००–६:४८ |
| **रात्रि** ६:४८–७:३६, ३:३६–४:२४ |
| **श्रेष्ठ– दिन** ६:४८–१०:०० |
| **रात्रि** ८:२४–१०:००, ४:२४–६:०० |

| वैशाख ६, १३, २०, २७ गते (सोमवार) |
|---|
| **सर्वश्रेष्ठ– रात्रि** ७:३६–९:१२ |
| **श्रेष्ठ– दिन** ६:००–७:२४, १०:४८–१:१२, ३:३६–५:१२ |
| **रात्रि** ९:१२–१०:००, १:१२–२:४८ |

| वैशाख ७, १४, २१, २८ गते (मंगलवार) |
|---|
| **सर्वश्रेष्ठ– रात्रि** ७:३६–९:१२, ३:३६–४:२४ |
| **श्रेष्ठ– दिन** ६:००–८:२४, १०:००–१२:२४, ४:३६–५:१२ |
| **रात्रि** ९:१२–१०:००, १२:२४–२:००, ४:२४–६:०० |

| वैशाख १, ८, १५, २२, २९ गते (बुधवार) |
|---|
| **सर्वश्रेष्ठ– दिन** ३:३६–४:२४ |
| **रात्रि** ९:१२–१०:४८ |
| **श्रेष्ठ– दिन** ७:३६–९:१२, ४:२४–६:००, ११:३६–१२:०० |
| **रात्रि** ६:४८–९:१२, २:००–६:०० |

| वैशाख २, ९, १६, २३, ३० गते (बिहीवार) |
|---|
| **सर्वश्रेष्ठ– रात्रि** ७:३६–९:१२ |
| **श्रेष्ठ– दिन** ६:००–८:२४, १०:४८–१:१२, ४:२४–६:०० |
| **रात्रि** ९:१२–१०:००, १:१२–२:४८, ४:२६–६:०० |

| वैशाख ३, १०, १७, २४, ३१ गते (शुक्रवार) |
|---|
| **सर्वश्रेष्ठ– रात्रि** १:१२–३:३६ |
| **श्रेष्ठ– दिन** ६:४८–१०:२४, १२:१२–१:१२, ४:२४–५:१२, |
| **रात्रि** ८:२४–१०:४८, ४:२४–६:०० |

| वैशाख ४, ११, १८, २५ गते (शनिवार) |
|---|
| **श्रेष्ठ– दिन** १०:३६–१२:२४, ३:३६–५:१२, |
| **रात्रि** ८:२४–१०:४८, २:००–३:३६, ४:२४–६:०० |

**नोट:**
**दिन–भन्नाले बिहान ६:०० देखि साँझ ६:०० सम्म**
**रात्रि–भन्नाले साँझ ६:०० देखि अर्को बिहान ६:०० सम्म**

*परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूद्वारा रचित 'ज्योतिष और काल निर्णय' ग्रन्थमा आधारित ।*

# सम्पर्क कार्यालय लेखनाथ, कास्की

गण्डकी अंचल कास्की जिल्लाको हिमालको काख मुनि रहेको सुन्दर सात तालको बगैँचा लेखनाथ नगरीको माझमा वडा नं.-७ बडहरे भन्ने ठाउँमा चारैतिरबाट देखिने देवी देवताहरूको मन्दिरहरू उत्तर कालिका भगवती, पूर्व चन्द्र कालिका, पश्चिम चण्डेश्वरी, वाराही, दक्षिण शिव मन्दिर, कालिका भएको त्रैलोक्य शिव मन्दिर परिसरमा अन्दाज १४/१५ रोपनी क्षेत्रफल जग्गामा विभिन्न जडीबुटी, वृक्ष भएको बगैँचासहितको यस देवस्थलमा सुन्दर एवं पवित्र सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय लेखनाथको आश्रम भवन रहेको छ। यो भवन ७० फुट लामो, ३० फुट चौडा, १२/१२ इन्च बिम, पिलर, ढुङ्गा र इँटाले निर्मित २ तले ढलान भएको भवन वरिपरि रेलिङ्ग बार माथिल्लो छत माथि देखिने बीच तलाबाट निर्मित विभिन्न कलाले कुदिएको सुन्दर मन्दिर यसै आश्रम भित्र रहेको छ। माथिल्लो तलामा गुरु आरती सञ्चालन हुनुका साथै बिक्री वितरण कक्ष पनि रहेको छ। तल्लो तलामा १ भान्सा, आवास, भजन कीर्तन, योग, ध्यान, जनसम्पर्क कक्ष रहेको छ। साथै यस भवनमा १९ वटा झ्याल, ८ वटा ढोका, ४ वटा शौचालय (बाथरुम) समेत चेनल सटर र चेनल गेट सहितको मूलद्वार रहेको छ।

यस आश्रम भवनको पूर्वमा शिव मन्दिर, नागेश्वर स्थान, हवन कुण्ड, समिधा घर, आगमन द्वार रहेको छ भने पश्चिम दिशामा कार्यक्रम मन्च सहितका ३,००० वर्ग फुटको ग्राउण्ड फेदिबाट फलामे रेलिङ्ग सहितको सिमेन्टेड सिडियुक्त बाटो छ। अगाडि गोरख निखिल बगैँचाको बीचमा २१ फुटे त्रिशूल रहेको छ। यस भवन अगाडि स्टेप, स्टेप ढुङ्गाको आँगन, फूल र विभिन्न जडीबुटी वृक्ष रोपिएको बगैँचा छ।

२०६२ आश्विन ३१ गते स्थापना भएको यस आश्रमले २०६२ मंसिर १ गते सिद्धाश्रम शक्ति केन्द्र, केन्द्रीय कार्यालयबाट सम्पर्क कार्यालयको रूपमा स्वीकृति प्राप्त गरेको हो। स्थापनाको केही महिना पछि नै स्थानीय त्रैलोक्यकेश्वर शिव मन्दिर परिसरमा रहेको जग्गामा आश्रम भवन निर्माण गर्ने सहमति भए बमोजिम २०६३ असार १२ गते भवन शिलान्यास गरी निर्माण कार्य पूरा भएपश्चात् हालसालै गत चैत्र १३ र १४ गते दुई दिवसीयरूपमा आश्रम भवन उद्घाटन समारोह पनि सफलतापूर्वक सम्पन्न गरिसकेको छ।

साथै यस आश्रममा ठीक बेलुकी ५ बजे दैनिक दिव्य गुरु आरती संचालन, प्रत्येक बिहीबार १० देखि १२ बजेसम्म गुरु पूजन एवं हवन साथै प्रत्येक महिनाको २१ तारीखमा दिव्य गुरु महोत्सव भव्यरूपमा मनाइन्छ भने समय समयमा योग तथा ध्यानका कक्षाहरू पनि सञ्चालन भइरहेका छन्। यस आश्रमको मातहतमा ले.न.पा.-१२ खुदीमा प्रचार प्रसार केन्द्र खोलिएको छ भने त्यसैगरी माझठाना गा.वि.स. भगवतीटारमा पनि आरती संचालन केन्द्र स्थापना भएको छ जहाँ नेपालकै पहिलो गोरक्ष निखिल मन्दिर तथा आश्रम भवनको निर्माण कार्य भइरहेको छ। जय गुरुदेव !

# स्वाधिष्ठान चक्र

**सिन्दूरपूररुचिरारुणपद्ममन्यत्**
**सौषुम्णमध्यघटितं ध्वजमूलदेशे ।**
**अंगच्छदं परिवृतं तडिदाभवर्णै-**
**र्वाधेः सबिन्दुलसितैश्च पुरन्दरांतै ॥**
**तस्यान्तरे प्रविलसद् विशदप्रकाश-**
**मम्भोजमण्डलमथो वरुणास्य तस्य ।**
**अर्द्धेन्दुरूपलसितं शरदिन्दुशुभ्रं**
**वङ्कारबीजममलमकराधिरुढम् ॥**

- षट्चक्रनिरूपण भा.२/१४-१५

मूलाधार चक्रभन्दा माथि स्वाधिष्ठान चक्र आउँदछ । यो मेरुदण्डभित्र सुषुम्नामा स्थित हुन्छ, जल तत्त्व प्रधान हुन्छ । यसको स्थान लिंग मूलको पछाडि हुन्छ । यो चक्र सिन्दुरे रंगको हुन्छ र ६ दल भएको कमलको आकारको हुन्छ । यसको मूल बीज मन्त्र 'वं' हो । र यसका ६ दलहरूका विभिन्न बीज मन्त्रहरू 'बं', 'भं', 'मं', 'यं', 'रं', 'लं'आदि हुन् ।

यस चक्रको शक्ति 'शाकिनी' र आधिष्ठात्री देवता 'विष्णु' हुन् । शुक्ल वर्णमा अर्ध चन्द्राकार जल मण्डल हुनाले यसको यन्त्रको स्वरूप पनि चन्द्र आकार हुन्छ । यसको वाहन 'मगर' हो । यसलाई Sacral hypogastric plexus सँग पनि तुलना गरिएको पाइन्छ ।

**स्वाधिष्ठान जागरणमा सावधानी**

मूलाधार चक्रको जागरणसँगै तपस्या वृद्धि गर्दै गएपछि स्वाधिष्ठान चक्र जागरणको क्रम आउँछ । जब यसको जागरण शुरु हुन्छ तब प्रत्येक साधक साधिकामा काम वासनाको अधिकता हुन्छ । यो चक्रको जागरणपछि साधकमा अत्यधिक सावधानी रहनु आवश्यक हुन्छ किनभने यदि सावधानी राख्न सकिएन भने अधोगामी प्रवृत्ति हुन्छ । सम्भवत: नैतिक पतन पनि हुन सक्छ । तर जो व्यक्ति कामवासनामा नियन्त्रण गर्न सक्दछ त्यसले ऊर्ध्वगामी प्रवृति प्राप्त गर्न सक्दछ । आफ्नो मनोनुकूल सन्तान आफ्नो रज: वा वीर्यद्वारा उत्पन्न गर्न सक्दछ । त्यो व्यक्तिको व्यक्तित्व यति अधिक सम्मोहक हुन्छ कि मानिसहरू उसको कुरा गर्न लालायित हुन्छन् ।

**चक्र जागरणका फाइदाहरु**

स्वाधिष्ठान चक्रको जागरणपश्चात् साधक स्त्री होस् या पुरुष उसको नपुंसकता समाप्त हुन्छ । उसलाई पूर्ण पुरुषत्व र पूर्ण नारीत्व प्राप्ति हुन्छ । वंशको उपलब्धि हुन्छ । पौरुषता अर्थात् निर्भयता र निडरता प्राप्ति हुन्छ । ब्रह्मचर्य अर्थात् कामवासनामाथि नियन्त्रण प्राप्ति हुन्छ । स्वत: आकर्षणको क्षमता प्राप्त हुन्छ । भौतिक साधनहरूको उपयोग गर्ने क्षमता पनि मिल्दछ । यो चक्र अपान वायुद्वारा सञ्चालित हुन्छ । अहंकार आदि विकार समाप्त हुन्छ ।

**स्वाधिष्ठान चक्र र अन्तःस्रावी ग्रन्थि**

(Related Endocrine glands)

यस चक्रको वरिपरि मृगौला र एड्रिनल ग्रन्थि हुन्छ । यस चक्रको क्रियाशीलताले ती अंगहरूमा प्रत्यक्ष प्रभाव पार्दछ । त्यसकारण यसको जागरण भएमा ती ग्रन्थि र अंगहरूले गर्ने निम्न कार्यहरूमा पनि निखार, प्रभावकारिता आउने स्वतः पुष्टि हुन्छ ।

**एड्रिनल ग्रन्थि** (Adrenal gland)

मानिसको शरीरमा यी ग्रन्थि एक जोडी हुन्छन् । यिनीहरू मृगौलाको माथिल्लो भागमा अवस्थित हुन्छन् । प्रत्येक ग्रन्थिको तौल चार ग्राम रहेको हुन्छ । यसको बनावटलाई दुई भागमा विभाजन गरिएको पाइन्छ । एड्रिनल कर्टेक्स र एड्रिनल मेडुला ।

**१.एड्रिनल कर्टेक्स** (Adrenal cortex) - यसबाट निम्न हार्मोनहरू निस्कन्छन्- मिनरलोकर्टिकोइड्स, ग्लुकोकर्टिकोइड् र सेक्स हार्मोन । जसमा मिनरलोकर्टिकोइड्सअन्तर्गत पनि अन्य हार्मोनहरू पर्दछन् जसलाई प्राणरक्षक हार्मोन भनिन्छ । यिनीहरूले रगतमा स्थित सोडियम, पोटासियम, हाइड्रोजनलाई सन्तुलनमा राखी रक्तचापको उचित मात्रा निर्धारण गर्नमा सहयोग पुऱ्याउँदछन् । ग्लुकोकर्टिकोइडले कार्बोहाइड्रेट, प्रोटिन र चिल्लो पदार्थको उचित चयोपचय गरी शरीरलाई स्वस्थ राख्नमा मद्दत पुऱ्याउँछ । यसैगरी सेक्स हार्मोनले प्रजनन अंगहरूको विकास गर्नमा महत्त्वपूर्ण भूमिका खेल्दछ । एड्रिनल कर्टेक्सले राम्रोसँग काम गरेन भने विविध प्रकारका घातक रोगहरू लाग्ने गर्दछन् जसमा कुसिङ्ग सिन्ड्रोम, एडिसन्स डिजिज आदि रोगहरू पर्दछन् ।

२. **एड्रिनल मेडुला** (Adrenal medula) : यसबाट एड्रिनालिन, नरएड्रिनालिन, डोपामिन आदि हार्मोनहरू निस्कन्छन् । यी हार्मोनहरूले शरीरका महत्त्वपूर्ण क्रियाहरू जस्तैः मुटुको गति, श्वासको गति, रक्तचाप आदि निर्धारण गर्नमा महत्त्वपूर्ण भूमिका खेल्दछन् । Fright, Flight & Fight अर्थात् डराएको अवस्थामा, उडेको अवस्थामा र लडाइँ-झगडाको आदि अवस्थाहरूमा एड्रिनालिन हार्मोन स्राव हुन्छ र यस अवस्थामा यसै हार्मोनले कार्य सञ्चालन गरिरहेको हुन्छ । त्यसैले स्वाधिष्ठान जागरण भएमा एड्रिनालिनको उचित र नियन्त्रित मात्रामा स्राव गराउन ठूलो मद्दत गर्दछ । जसका कारण स्वाधिष्ठान जागरणपश्चात् साधक साधिकामा निर्भिकता, निडरता उत्पन्न हुन्छ भनेर योगशास्त्रहरूमा वर्णन गरिएको पाइन्छ ।

**मृगौला**

मृगौलको मूल कार्य भनेको शरीरमा भएको रगतलाई छानेर उचित मात्रामा पिसाब र विजातीय पर्दाथहरूको निष्काशन गर्नु हो । यदि मृगौलामा केही गडबडी उत्पन्न भए धेरै घातक रोगहरू पनि लाग्न सक्छन् । यसबाट पनि दुईवटा हार्मोनहरू निस्कन्छन्- रेनिन र इरिथ्रोपोएटिन । रेनिनले शरीरको रक्तचाप सन्तुलन राख्नमा मद्दत पुऱ्याउँछ भने इरिथ्रोपोइटिनले रक्तकोषको उचित उत्पादनमा सहयोग पुऱ्याउँदछ ।

साथै यस चक्रको वरिपरि पनि धेरै नाडीहरू रहेका हुन्छन् । ती नाडीहरूको कार्यको प्रभावकारितामा पनि यस चक्रको जागरणले प्रभाव पार्दछ ।

त्यसैले सक्षम सद्गुरुहरूको मार्गनिर्देशनमा योग साधना, ध्यान, मन्त्र, हवन आदि साधनाहरू सम्पन्न गर्दै साधक बनौं, कुण्डलिनी चक्र जागरणको रसास्वादन गर्दै जीवनलाई ऊर्ध्वमुखी बनाऔं । क्रमशः

# अमृत समान जडिबुटी गुर्जो

गुर्जो अर्थात् अमृताको उत्पत्ति प्रसंगमा एउटा रोचक कथा रहेको पाइन्छ। जब लंकाका राजा अभिमानी रावणले सीता हरण गरेर लगे, त्यसपछि श्रीरामले वानर सेनाहरू सहित लंकामा आक्रमण गर्नुभयो। देवताका घोर शत्रु रावणमाथि भगवान् श्रीरामले कठिन युद्धपश्चात् विजय प्राप्त गर्नुभयो। त्यस समयमा थुप्रै वानर सेनाहरूको मृत्यु भएको थियो। तर आफ्नो शत्रु रावणको मृत्यु भएको खुशीयालीमा हजारौँ नेत्र भएका स्वर्गका राजा इन्द्रले अमृतको वर्षा गर्नुभयो। सबै मृत वानर सेनाहरू जीवित भए। जहाँ जहाँ अमृतका थोपाहरू पृथ्वीमा खसे ती-ती ठाउँहरूबाट अमृता नामक दिव्य जडीको उत्पत्ति भयो र यसले मानिसहरूलाई अमृतकै रूपमा स्वास्थ्यलाभ गराउन थाल्यो।

**गुडूची कटुका तिक्ता स्वादुपाका रसायनी।**
**संग्राहिणी कषायोष्णा लघ्वी बल्याग्निदीपनी॥**
**दोषत्रयामतृड्दाहमेहकासांश्च पाण्डुताम्।**
**कामलाकुष्ठवातास्रज्वरकृमिवमीहरेत्॥**
**- भावप्रकाश निघण्टु**

गुडूची कटु, तिक्त तथा कषाय रसयुक्त हुन्छ। विपाक मधुर हुन्छ। रसायन, संग्राही, ऊष्णवीर्य, लघु, बलकारक, अग्निदीपक तथा त्रिदोष, आम, तृष्णा, दाह, कास, पाण्डु, कामला, कुष्ठ, वातरक्त, ज्वर, कृमी आदि रोगहरू नाशक हुन्छ।

**अमृता सांग्राहिक-वातहर-दीपनीय**
**श्लेष्मशोणितविबन्धप्रशमनानाम्।**
**-च.सू.२५**

गुडूची सांग्रहिक छ। यसले वातदोषहर, दीपन, रक्त, कफ दोष, कब्जियत आदिलाई प्रशमन गर्दछ।

**परिचय**

ल्याटिन नाम- Tinospora cordifolia (Willd), पर्यायवाची नाम- गुडूची, मधुपर्णी, अमृता, छिन्नरुहा, वत्सादनी, तन्त्रिका, कुण्डलिनी, चक्रलक्षणिका, गिलोय। अंग्रेजी नाम- Tinospora, कुल नाम- menispermaceae.

**स्वरुप** : यो एकप्रकारको बहुवर्षायु झाडीदार लहरा हो जुन नीम, आँप आदि वृक्षहरूमा लहराको रूपमा फैलिएको हुन्छ। काण्ड मांसल हुन्छ। पत्र हृदयाकार, जालीदार, स्निग्ध हुन्छ। फल मटरको दाना समान अण्डाकार, चिल्लो, मांसलयुक्त हुन्छ र पाकेपछि रातो हुन्छ। वर्षा ऋतुमा पुष्प र शीतकालमा फल लाग्ने गर्दछ। यो प्राय नेपालभरि पाइन्छ साथै खेती पनि गरिन्छ।

**रासायनिक संगठन-** बर्बेरिन, गिलोइन, उडनशील तैल, वासाम्ल तथा काण्डमा एक प्रकारको स्टार्च पाइन्छ।

**प्रयोज्य अंग -** काण्ड।

**प्रयोग** : यो त्रिदोष विकार नाशक हुन्छ। घिउको साथ वायु, शर्कराको साथ पित्त, मधुको साथ कफ विकार नाश गर्दछ। कुष्ठ, वातरक्त आदि रोगमा सिद्ध तैलको साथमा प्रयोग गर्नुपर्दछ। तृष्णा, सर्दी, अग्निमान्द्य, शूल, कलेजो विकार, कामला, अम्लपित्त, प्रवाहिका, ग्रहणी, कृमी, हृदयदौर्बल्य, वातरक्त, आमवात, पाण्डु, कास, शुक्रदौर्बल्य, मधुमेह, विसर्प, चर्मरोग, फिरङ्गी, जीर्णज्वर, विषमज्वर, दाह र रसायन

कर्म आदिमा प्रयोग गरिन्छ ।

**गुडूची सत्व–** यसको काण्डलाई पिसेर पानीमा घोल्ने । यसरी घोल्दा पिँधमा सेतो पाउडर जम्मा हुन्छ । उक्त पाउडरलाई घाममा सुकाउने यसैलाई गुडुची सत्व भनिन्छ । यसमा धेरै मात्रामा शक्तिदायक स्टार्च हुन्छ ।

**वैज्ञानिक अनुसन्धानहरू-**

**रोगप्रतिरोधात्मक क्षमतामा वृद्धिः**

(Immunomodulatory activity)

गुडुचीमा पाइने Cordioside, Cordiofolioside लगायत अन्य रसायनहरूले मानव शरीरमा आइ.जि.जि. एण्टिबडीहरूको वृद्धि गराउँदछ । यसले बि. र टी. लिम्फोसाइडहरूको वृद्धि गराउँछ साथै न्युट्रोफिल्स, म्याक्रोफेजेज आदिको संख्यामा पनि वृद्धि गराउँछ जसले गर्दा शरीरमा रोगका कीटाणुहरूलाई सहजै निर्मूल पार्न सक्ने क्षमता उत्पन्न हुन्छ ।

**वेदनानाशक कार्य** : (Antiinflammatory activity)

गुडूचीमा पाइने रासायनिक तत्त्वहरू Syringin र Cordial ले वेदनानाशक औषधिहरू NSAIDs को जस्तै शरीरको दुखाइ कम गर्ने कार्य गर्दछन् । बिहानको समयमा वातरक्त (Rheumtoid arthritis) रोगीका हातहरू जकडिने हुन्छन् । उक्त समस्यालाई पनि यिनै तत्त्वले समाधान गर्दछ ।

**मधुमेहनाशक कार्य** : (Antidiabetic activity)

गुडूचीको जरा, काण्ड र पातमा मधुमेह नाशक गुण रहेको पाइएको छ । प्राणीहरूमा गुर्जोले रक्त शर्कराको मात्रालाई घटाउन मद्दत गर्दछ । Pyrolidine नामक रसयान लाई मुसामा प्रयोग गर्दा रक्तशर्कराको मात्रा अति घटेको पाइएको थियो । यसबाट गुडूचीले मधुमेहलाई फाइदा पुऱ्याउने स्पष्ट हुन्छ ।

**कलेजोलाई सुरक्षा तथा संवर्धन गर्ने कार्य** : (Hepatoprotective action)

अत्यधिक मद्यपानको सेवनबाट तथा अन्य कारणबाट हाम्रो कलेजोका कोषहरू जस्तै कफर सेलहरू निष्क्रिय हुने गर्दछन् । यस अवस्थामा गुडूचीको प्रयोगले कलेजोको कार्य सुचारु हुन मद्दत गर्दछ । बाख्रामा गरिएको एउटा प्रयोगबाट गुडूचीमा कलेजो सुरक्षा गर्ने गुणहरू रहेको पाइयो ।

**तनावनाशक कार्य** : (Antistress activity)

गुडूचीमा डायजिपाम समान मानिसको तनावलाई कम गर्ने गुण रहेको पाइएको छ । यसै तनावका कारण उत्पन्न हुने अल्सरबाट पनि यसले जोगाएको पाइयो ।

**विशिष्ट औषधीय कल्पना–** गुडूच्यादि चूर्ण, गुडुच्यादि क्वाथ, गुडुची लौह, अमृतारिष्ट, गुडूची तैल, गुडूची सत्व आदि । **मात्रा–** क्वाथ ५० देखि १०० मि.लि. । **चूर्ण–** ३-६ ग्राम । **सत्व–** १-२ ग्राम ।

**नोटः** प्रायः ताजा गुडूचीको प्रयोग गर्नुपर्दछ । संग्रह गर्नु परेमा वर्षा ऋतुपूर्व छायाँमा सुकाएर राख्नुपर्दछ । गुडूचीमा कुनै पनि प्रकारको औषधीय रासायनिक प्रतिक्रिया, पार्श्व असर, विषाक्तता पाइएको छैन ।

माथि उल्लिखित रोगहरूमा गुडूची तथा यसबाट बनेका आयुर्वेद औषधिहरूको प्रयोग आयुर्वेद चिकित्सकको परामर्श अनुसार प्रयोग गरेर स्वास्थ्यलाभ गर्न सकिन्छ । साथै सुलभरूपमा देखिने गुडूचीको बिरुवालाई घर वरपर लगाउनु, जोगाउनु, यसलाई चिन्नु, औषधीयरूपमा प्राकृतिक गुडुचीलाई आफैले प्रयोग गरेर हेर्नु, आफ्ना सन्तानलाई यस जडिबुटीका बारेमा जानकारी दिनु हामी सबैको कर्तव्य हो, आयुर्वेद र प्रकृतिको सत्तालाई सम्मान गर्नु हो ।

जय गुरुदेव !

## २०६७ वैशाख महिनामा पर्ने चाडपर्वहरु

| | |
|---|---|
| वैशाख १ गते | नववर्षारम्भ, मातातीर्थ औँसी<br>**तान्त्रोक्त महालक्ष्मी हवन**<br>**तान्त्रोक्त विन्ध्यवासिनी हवन** |
| वैशाख २ गते | **तान्त्रोक्त बगलामुखी हवन,**<br>**तान्त्रोक्त महर्षि वेदव्यास हवन,**<br>पुरुषोत्तम महिना शुभारम्भ |
| वैशाख ६ गते | **श्री शिव गोरक्ष हवन** |
| वैशाख ७ गते | **तान्त्रोक्त वटुक भैरव हवन,**<br>**तान्त्रोक्त गणपति हवन** |
| वैशाख ८ गते | **सद्गुरुदेव अवतरण दिवस,**<br>**सि.श.के.को ११ औं वार्षिकोत्सव** |
| वैशाख ९ गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| वैशाख ११ गते | पद्मिनी एकादशी |
| वैशाख १३ गते | प्रदोष व्रत |
| वैशाख २३ गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| वैशाख २६ गते | परमा एकादशी |
| वैशाख २८ गते | प्रदोष व्रत |
| वैशाख ३१ गते | पुरुषोत्तम महिना समाप्त |

**प्रत्येक बृहस्पतिबार बिहान १०:00 बजे–गुरु पूजन**

**प्रत्येक दिन साँझ ५:00 बजे–आरती**

# यस्तो रह्यो २०६६ साल

नववर्ष २०६७ को आगमन भएको छ । परमपूज्य सद्‌गुरुदेवहरूको असीम कृपा, अनुकम्पा र आशीर्वादस्वरूप स्थापित सिद्धाश्रम शक्ति केन्द्र (सि.श.के.) ले स्थापना कालदेखि आध्यात्मिक गतिविधिहरूमार्फत समाजमा छुट्टै पहिचान बनाउन सफल भएको छ । यही पहिचानलाई आत्मसात् गर्दै संस्थाले २०६६ सालमा पनि आफ्ना नियमित गतिविधिहरूलाई निरन्तरता दिन सफल रह्यो । गत वर्ष संस्थाले सम्पन्न गरेका कार्यक्रमहरूको यहाँ सर्सर्ती चर्चा गरिएको छ ।

**१. नियमित कार्यक्रमहरू**

केन्द्रले नियमित कार्यक्रमको रूपमा सञ्चालन गर्दै आइरहेका निम्न कार्यक्रमहरूलाई पनि गत वर्ष पनि सम्पन गऱ्यो । यसक्रममा सम्पन्न भएका दैनिक कार्यक्रमहरू निम्नप्रकार छन्–

१.१ **दैनिक कार्यक्रम**

यस केन्द्रमा प्रत्येक दिन आश्रम खुल्ने समय यथावत् रह्यो । बेलुकीको ५ बजेको नित्य आरती पनि प्रत्येक दिन सम्पन्न भयो । प्रत्येक दिन हुने दिव्य आरतीमा साधक साधिकाहरूको उल्लेखनीय सहभागिता रहने गरेको थियो ।

१.२ **साप्ताहिक कार्यक्रम**

साप्ताहिक कार्यक्रमको रूपमा गत वर्ष सम्पन्न भएका कार्यक्रमहरू निम्नानुसार छन्–

क) प्रत्येक वृहस्पतिबारको गुरु पादुका पूजन कार्यक्रम पनि प्रत्येक हप्ता सम्पन्न भयो ।

ख) प्रत्येक शुक्रबार बेलुका ४:०० बजे कार्यकर्ताहरूका लागि सञ्चालन हुँदै आइरहेको स्टाफ मिटिङ कार्यक्रम निर्धारित समयमा हरेक शुक्रबार सम्पन्न भयो ।

घ) प्रत्येक हप्ता सञ्चालित गोरक्ष निखिल सन्देश रेडियो कार्यक्रम गत वर्ष पनि विभिन्न जिल्लाहरूमा विभिन्न १७ वटा रेडियो स्टेशनहरूमार्फत् प्रसारण भए ।

१.३ **मासिक कार्यक्रम**

क) दिव्य गुरु महोत्सव : यस कार्यक्रमलाई यस केन्द्रले गत वर्ष पनि भव्यताका साथ सम्पन्न गर्न सफल भयो ।

ख) मासिक हवन कार्यक्रम : सि.श.के.ले गत वर्ष पनि श्री शिव गोरक्ष हवन कार्यक्रम, तान्त्रोक्त वटुक भैरव हवन कार्यक्रम, तान्त्रोक्त महालक्ष्मी हवन कार्यक्रम, तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम क्रमशः प्रत्येक महिनाको पहिलो सोमबार, मंगलबार, बुधबार र बिहीबार सम्पन गऱ्यो । साथै, सि.श.के. सम्पर्क कार्यालय रामघाट, कास्कीले माता विन्ध्यवासिनीको दिव्यतम हवन कार्यक्रम विन्ध्यवासिनी मन्दिर प्राङ्गणमा प्रत्येक महिनाको पहिलो बुधबार सम्पन्न गऱ्यो । त्यसैगरी सम्पर्क कार्यालय दमौली, तनहुँले पनि महर्षि वेदव्यासको दिव्यतम हवन कार्यक्रम व्यास गुफा परिसरमा सम्पन्न गऱ्यो ।

ग) संस्थाले प्रत्येक महिनाको २० र २१ गते सञ्चालन गर्दै आइरहेको मासिक कार्यकर्ता तालिम तथा प्रशिक्षण कार्यक्रमहरू गत वर्ष पनि सम्पन्न भए ।

१.४ **वार्षिक कार्यक्रम**

**क) सद्‌गुरुदेव अवतरण दिवस :**

परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको ७६ औं अवतरण दिवसलाई भव्यताका सम्पन्न गऱ्यो । परमपूज्य सद्‌गुरुदेवहरूको विशेष पूजन स्तुति वन्दना, स्तवन पाठ, मन्त्र जप, विशेष ध्यान, हवन, आरती, भजन कीर्तन, नृत्य, आदि विविध कार्यक्रम साथ सम्पन्न भएको थियो ।

**ख) रोट महोत्सवः**

संस्थाले छैटौं रोट महोत्सव कार्यक्रमलाई वैशाख २६ देखि जेठ ५ गतेसम्म भव्यरूपमा सम्पन्न गऱ्यो । गोरखाको गोरख गुफामा सम्पन्न रोट महोत्सवमा श्री श्री महायोगी गुरु गोरखनाथको चरणमा सवालाख रोट अर्पण, प्रत्येक दिन सवालाख बत्ती प्रज्ज्वलनलगायत भजनकीर्तन, पूजन, हवन आदि कार्यक्रमहरू सम्पन्न भएका थिए ।

**ग) महाप्रयाण दिवसः**

परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजले महाप्रयाण लिनुभएको दिन (जुलाई ३) लाई यस केन्द्रले महाप्रयाण दिवसको रूपमा विशेष कार्यक्रमका साथ सम्पन्न गऱ्यो । सि.श.के. केन्द्रीय कार्यालयलगायत सम्पूर्ण सम्पर्क कार्यालयहरूमा बिहान ९ बजेदेखि ४ बजेसम्म परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको दिव्य मन्त्रको जप गरेर यस कार्यक्रमको आयोजना गरिएको थियो ।

**घ) गुरु पूर्णिमा महोत्सवः**

गुरु पूर्णिमा महोत्सवलाई गत वर्षको श्रावण ३ गते यस केन्द्रले केन्द्रलगायत सम्पूर्ण सम्पर्क कार्यालयहरूमा विशेष कार्यक्रमको आयोजना गरी भव्यताका साथ सम्पन्न भयो । केन्द्रको आयोजनामा सञ्चालित गुरु पूर्णिमामा निखिल स्तवन, गोरक्ष स्तवनको पाठ, पूजन, मन्त्रजप, हवन, आरती, भजन कीर्तन प्रवचन, विशेष मुद्रा ध्यान कार्यक्रमका साथ सम्पन्न भएको थियो । उक्त दिन बेलुकी आश्रममा भजनकीर्तन र दीपावली पनि गरिएको थियो ।

**ङ) श्री शिव गोरक्ष महोत्सव**

परमपूज्य सद्‌गुरुदेवहरूको कृपा, आशीर्वादस्वरूप यस केन्द्रले श्रावण महिनालाई श्री शिव गोरक्ष महोत्सवको रूपमा मनाउँदै आउने क्रमलाई गत वर्ष पनि निरन्तरता दिने सौभाग्य प्राप्त गऱ्यो । केन्द्रीय कार्यालयलगायत सम्पूर्ण सम्पर्क कार्यालयहरूमा महिनाभर नै विविध कार्यक्रमहरूका साथमा परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथको मन्त्र लेखन तथा विशेष सुरक्षा मन्त्र जप गरेर यस कार्यक्रमलाई सम्पन्न गरिएको थियो ।

**च) गुरुमाताको शुभ–जन्मदिवस**

प्रत्येक वर्षको अप्रिल ८ तारीखलाई यस केन्द्रले पूजनीय गुरुमाता भगवती श्रीमालीज्यूको जन्म दिवसको रूपमा मनाउँदै आउने क्रममा गत वर्षको चैत्र २६ गते विशेष कार्यक्रमका साथ केन्द्रलगायत विभिन्न सम्पर्क कार्यालयहरूमा अपराह्न ३ बजेदेखि भजनकीर्तन, प्रसाद वितरण र बेलुकी दीपावलीका साथ हर्षोल्लासका साथ सम्पन्न भयो ।

### २ विशेष चाडपर्वमा सञ्चालित कार्यक्रम

गत वर्ष नववर्ष, ऋषितर्पणी, नागपञ्चमी, श्रीकृष्णजन्माष्टमी, ऋषिपञ्चमी, हरितालिका तीज, नवरात्रि, देउसीभैलो, दीपावली, श्रीपञ्चमी, महाशिवरात्रिलगायतका कार्यक्रमहरूलाई संस्थाले विविध कार्यक्रमका बीच सम्पन्न गर्न सफल भयो ।

### ३. संगठन विस्तार

सम्पर्क कार्यालयहरूलगायत विभिन्न आरती सञ्चालन केन्द्र, प्रचारप्रसार कक्ष र ठाउँ ठाउँमा थप भए ।

### ४ प्रकाशन

गोरक्ष निखिल वाणी मासिक पत्रिकाको गत वर्ष पनि यस केन्द्र नियमित प्रकाशन गर्न सफल भयो भने क्यालेण्डर पनि गत वर्ष प्रकाशन गऱ्यो ।

### ५ गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम

गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम गत वर्ष पनि विविध कार्यक्रमसहित अगाडि बढ्यो । हाल यस विद्याश्रममा १० कक्षासम्म पढाई हुने व्यवस्था भयो ।

### ८ ध्यान तथा साधना कार्यक्रम

विभिन्न चरणका ध्यान कक्षा एवं साधना कार्यक्रमअन्तर्गत गत वर्ष केन्द्रलगायत विभिन्न सम्पर्क कार्यालयहरूमा यस्ता ध्यानका कक्षा सम्पन्न भइसकेका छन् । गत वर्ष पहिलो, दोस्रो र तेस्रो चरणका ध्यान कक्षाहरू सम्पन्न भएका थिए । गतवर्ष नै माता गोरखकाली र माता मनकामनाको साधना सम्पन्न भए भने विविध प्रयोगहरू पनि सम्पन्न भएका थिए । जय गुरुदेव !

# गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम- गत वर्षका केही झलकहरु

Saraswati Pooja

Divya Guru mahotsav

Parents day

Shree panchani

Christmas celebration

Hostelers' outing

Educational tour in Kantipur Hospital

Outing in Bhaktapur

Friday ECA Program

Holi @ GNJDV

Children's day celebration

1st Prize in Football

Annual Sports Day

Marathon race

IH basketball competition

## हवन कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्रका मासिक हवन कार्यक्रम अन्तर्गत हरेक महिनाको पहिलो हप्ता सञ्चालन हुँदै आइरहेका हवन कार्यक्रमहरू गत चैत्र महिनामा निम्नानुसार सम्पन्न भए– चैत्र २ गते सोमबार पशुपति मृगस्थलीस्थित श्री गुरु गोरखनाथको मन्दिर प्रांगणमा श्री शिव गोरक्ष हवन, चैत्र ३ गते मंगलबार लगनखेलस्थित वटुक भैरव मन्दिर प्रांगणमा तान्त्रोक्त वटुक भैरव हवन, चैत्र ४ गते बुधबार लखनखेलस्थित माता महालक्ष्मीको मन्दिर प्रांगणमा तान्त्रोक्त महालक्ष्मी हवन र चैत्र ५ गते बिहीबार कुम्भेश्वर पाटनस्थित माता बगलामुखी मन्दिर प्रांगणमा तान्त्रोक्त बगलामुखी हवन सम्पन्न भयो। उपरोक्त हवन कार्यक्रमहरूमध्ये तान्त्रोक्त वटुक भैरव हवन बिहान ७:०० बजेदेखि सञ्चालन भएको थियो भने बाँकी हवन कार्यक्रमहरू बिहान ८:०० बजेबाट सञ्चालन भएका थिए ।

यस्तै मासिक हवनकै शृङ्खलामा गत चैत्र ४ गते बुधबार पोखराको विन्ध्यवासिनी मन्दिर प्रांगणमा तान्त्रोक्त विन्ध्यवासिनी हवन कार्यक्रम सम्पन्न भयो । चैत्र ६ गते बिहीबार तनहुँको दमौलीस्थित वेदव्यास गुफा परिसरमा तान्त्रोक्त महर्षि वेदव्यास हवन कार्यक्रम सम्पन्न भयो । चैत्र ३ गते मंगलबार भक्तपुरको सूर्यविनायक मन्दिर प्रांगणमा तान्त्रोक्त गणपति हवन सम्पन्न भयो भने उक्त दिनमा नै काभ्रेको चण्डेश्वरी मन्दिरमा तान्त्रोक्त चण्डेश्वरी हवन सम्पन्न भयो ।

## दिव्य गुरू महोत्सव

अप्रिल २१, १९३३ मा भएको परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूको अवतरणप्रति नतमस्तक हुँदै प्रत्येक महिनाको २१ तारीखलाई दिव्य गुरु महोत्सवको रूपमा मनाउँदै आइरहेको सिद्धाश्रम शक्ति केन्द्रले गत चैत्र ८ गते (मार्च २१ तारीख) पनि यस कार्यक्रमलाई सदाझैं भव्य एवं दिव्यरूपमा सम्पन्न गऱ्यो । काठमाडौंको बसुन्धरास्थित गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम प्रांगणमा सम्पन्न भएको उक्त कार्यक्रमको शुभारम्भ बिहान १०:१५ बजे प्रार्थना तथा गोरक्ष निखिल स्तवनको पाठबाट भएको थियो । दुई चरणमा विभाजित उक्त कार्यक्रम अपराह्न ३:३० सम्म सञ्चालन भएको थियो । कार्यक्रमको पहिलोचरणमा गुरु पूजन, मन्त्रजप, हवन, आरती, लक्षदीप अर्पण आदि क्रमहरू सम्पन्न भएका थिए भने दोस्रो चरणअन्तर्गत भजनकीर्तन, नृत्य, प्रवचन आदि क्रमहरू रहेका थिए। कार्यक्रममा पूजन गर्ने सौभाग्य प्रसाद वितरणको अभिभारा वहन गर्दै चञ्चला शर्मा, अर्जुनबाबु धिताल र विद्या धितालले प्राप्त गर्नुभएको थियो ।

कार्यक्रमको दोस्रो चरण गुरुसेवा दलका सदस्य साधक गोकुल लिम्बूको स्वागत-मन्तव्यबाट शुरु भएको थियो । प्रवचन एवं स्ववचनको क्रममा बोल्दै सावरपन्थी २ का सदस्यले गुरु भक्ति माथि जोड दिनुभएको थियो । दोस्रो चरण भजनमय, नृत्यमय भएको थियो ।

देश विदेशमा संस्थाअन्तर्गत रहेका सम्पर्क कार्यालयहरू, इकाईहरूमा पनि विविध कार्यक्रमका साथ दिव्य गुरु महोत्सव मनाइएको थियो ।

## गुरू मन्त्र हवन साधना सम्पन्न

**गत वर्षको चैत १ देखि ९ गतेसम्म काठमाडौंको बसुन्धरास्थित सिद्धाश्रम शक्ति केन्द्रको आश्रममा दिव्य गुरु मन्त्र हवन साधना आयोजित भयो ।**

**प्रत्येक दिन बिहान ६ बजेदेखि शुभारम्भ भएको उक्त हवन साधना कार्यक्रमलाई विभिन्न समयमा बाँडिएको थियो । दुई-दुई घण्टाको फरकमा बेग्लाबेग्लै समूहले हवन साधनामा भाग लिनुभएको उक्त कार्यक्रममा सहभागीले निरन्तर तीन दिनसम्म तोकिएको समय तालिकाअनुसार हवनमा भाग लिएर पूर्णाहुति गरेपछि मात्र मन्त्रको अधिकारी हुने प्रावधान रहेको थियो । हवन साधनामा तीनै दिन स्नान गरेर शुद्ध पवित्र भएर आउनुपर्ने नियम राखिएको थियो ।**

**कार्यक्रममा सहभागीहरूले परमपूज्य सद्‌गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ र परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको मन्त्र प्राप्त गर्ने सौभाग्य प्राप्त गर्नुभएको थियो। एउटै कार्यक्रममा दुवै गुरुहरूको मन्त्र प्राप्त गर्ने महान अवसर विरलै मात्र प्राप्त हुन्छ, यस्तो दुर्लभ अवसरलाई सिद्धाश्रम शक्ति केन्द्रले प्राप्त गरेको थियो र यस्तो अवसरमा भाग लिएर परमपूज्य एवं आराध्य सद्‌गुरुदेवहरूको दिव्य मन्त्र प्राप्त गर्ने नौसय सतहत्तर जना सबै नै बधाइका पात्र हुनुभएको छ, गौरवका पात्र हुनुभएको छ, सौभाग्यशाली बन्नुभएको छ ।**

## गुरुमाता जन्मोत्सव

पूजनीय गुरुमाता भगवती देवी श्रीमालीज्यूको जन्म दिवस अप्रिल ८ तारिख अर्थात् गत चैत्र २६ गतेका दिन सिद्धाश्रम शक्ति केन्द्रले भजनकीर्तन, प्रसाद वितरण तथा दीपावली गरेर मनायो । संस्थाअन्तर्गत सम्पर्क कार्यालय लगायत विभिन्न एकाइहरुमा सो दिन कार्यक्रम आयोजना भएको थियो ।

## तालिम तथा प्रशिक्षण कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्रले गत चैत्र २० र २१ गते आध्यात्मिक नेतृत्वकर्ताहरूको तालिम तथा प्रशिक्षण कार्यक्रम सम्पन्न गऱ्यो । बिहान १० बजे स्तुति प्रार्थनाबाट शुभारम्भ भएको उक्त तालिम तथा प्रशिक्षण कार्यक्रममा पहिलो दिन फौदबहादुर सुनुवार, नागेश कँडेल, सिर्जना कुइँकेल र गीता कँडेल र दोस्रो दिन बिनु चालिसे, विष्णु पराजुली, नन्दा विष्ट, नारायणकाजी मानन्धर, हृदयराम महर्जन र रुद्र वस्तीले गुरु पादुकाको पूजन गर्ने सौभाग्य प्राप्त गर्नुभएको थियो ।

दुवै दिनको प्रशिक्षणमा आवाहयामी भजन, सच्चिदानन्द स्तवन, निखिल स्तवन, गुरु स्तवन, सिद्धाश्रम पंचक, निखिल पंचरत्नादि सामूहिक वाचन गर्नुका साथै परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजले दिनुभएको हृदयस्पर्शी प्रवचन पनि सुनाइएको थियो । यसै गरी भजनकीर्तन तथा आरती पनि सम्पन्न भएको थियो । कार्यक्रममा सा.प.२ तथा तथा सा.मा.४ ज्यूहरुले विविध विषयमा प्रशिक्षण दिनुभएको थियो ।

## आश्रम भवन समुद्घाटन

**कास्की जिल्लाको लेखनाथमा रहेको सिद्धाश्रम शक्ति केन्द्रको सम्पर्क कार्यालयले गत चैत्र १३ र १४ गते दुई दिवसीय समारोह आयोजना गरी आफ्नो आश्रम भवन उद्‌घाटन गऱ्यो ।**

**कार्यक्रमको पहिलो दिन बिहान ६ बजे विशेष पूजनपश्चात् आश्रममा राखिएको सद्‌गुरुदेवहरूको मूर्ति अनावरण गरिएको थियो । सो पछि विभिन्न नारा र ब्यानर सहित लेखनाथ चोकबाट निस्केको ऱ्याली सद्‌गुरुदेवहरूको जय-जयकार गर्दै विभिन्न स्थानहरू परिक्रमा गरी आश्रम भवनमा आएर समारोहमा परिवर्तित भएको थियो । ऱ्यालीपश्चात् शिलालेख अनावरण सा.प.१ र २ ज्यूबाट सम्पन्न भएको थियो । भजनकीर्तन, नृत्य प्रतियोगिता, स्वास्थ्य शिविर र रक्तदान कार्यक्रम पनि उक्त समारोहमा रहेको थियो । दुवै दिनका कार्यक्रममा विभिन्न वक्ताहरूले शुभकामना मन्तव्य पनि राख्नुभएको थियो भने भवन निर्माणको प्रतिवेदन पनि सुनाइएको थियो । कार्यक्रमको पहिलो दिनमा भएको नृत्य प्रतियोगिताका विजेताहरूलाई दोस्रो दिनमा पुरस्कृत गरिएको थियो । कार्यक्रममा स्मारिका विमोचन पनि भएको थियो ।**

**कार्यक्रममा सा.प. १ र २ ज्यूले प्रवचनको क्रममा बोल्नुभएको थियो साथै त्रैलोकेश्वर महादेवसँग सम्बन्धित विशेष प्रयोग र ध्यान पनि सम्पन्न गराउनुभएको थियो ।**

**सिद्धाश्रम शक्ति केन्द्रको इतिहासमा लेखनाथ आश्रम रामघाट (पोखरा) र सौरपानी (गोरखा) पछिको तेश्रो आश्रम भवन उद्‌घाटन समारोह आयोजना गर्ने सम्पर्क कार्यालयको रूपमा इतिहास कोर्न सफल रह्यो ।**

## विविध कार्यक्रमहरू

**भक्तपुर**: गत चैत्र ७ गते भक्तपुर-५ याछे टोलमा स्थानीय बासिन्दा तथा भक्तजनको बाक्लो उपस्थितिमा भजनकीर्तन कार्यक्रम सम्पन्न भयो । त्यस्तै चैत्र १८ गते बुधबार सा.प. २ ज्यूको उपस्थितिमा अन्तरक्रियात्मक प्रशिक्षण कार्यक्रम एवं हाजिना समूहको बिदाइ कार्यक्रम सम्पन्न भयो । कार्यक्रम सञ्चालन हाजिना विनीता अर्यालज्यूले गर्नुभएको थियो ।

**काठमाडौं (बबरमहल)**: आरती संचालन केन्द्र बबरमहलले गत चैत्र २४ गते आफ्नो दोस्रो वार्षिकोत्सव मनायो । कार्यक्रममा स्तुतिवन्दना, भजनकीर्तन, गुरु मन्त्र जप, आरतीका साथसाथै थापाथलीस्थित गुरु गोरखनाथको मन्दिरमा सफाइ पनि गरिएको थियो ।

**काठमाडौं (तीनथाना)**: आरती संचालन केन्द्र तीनथाना, कीर्तिपुरले गत चैत्र १४ आफ्नो वार्षिक उत्सवलाई भजनकीर्तनसहित मनाएको छ । स्थानीय प्याराडाइज रिडर्स एकेडेमीको प्रांगणमा आयोजित उक्त कार्यक्रममा स्थानीय बुद्धिजीवीहरूलगायतले संस्थाका बारेमा बोल्नुभएको थियो ।

**सिन्धुपाल्चोक (सुकुटे)**: सम्पर्क कार्यालय बाह्रबिसेको आयोजनामा गत चैत्र २८ गते सिन्धुपाल्चोकको सुकुटेमा भजनकीर्तन तथा नि:शुल्क स्वास्थ्य शिविर सम्पन्न भयो । कार्यक्रममा भजनकीर्तन तथा नृत्यहरू प्रस्तुत भएका थिए भने एकसय त्रियासी जनाले स्वास्थ सेवा लिनुभएको थियो । उल्लेख्य भक्तजनहरूको सहभागिता रहेको उक्त कार्यक्रममा स्थानीय व्यक्तित्वहरूबाट मन्तव्यका साथसाथै सावरपन्थी २ ज्यूबाट प्रवचन तथा ध्यान पनि सम्पन्न भएको थियो । कार्यक्रमको भोलिपल्ट अर्थात् २९ गते बाह्रबिसे सम्पर्क कार्यालयमा कार्यकर्ता प्रशिक्षण समेत सम्पन्न भएको थियो ।

'निखिल तत्त्व' अर्थात् 'परमतत्त्व'–यो त्यो तत्त्व हो जसबाट समस्त तत्त्वहरूको प्रादुर्भाव भएको छ। सबै तत्त्वहरू निखिल तत्त्वबाट नै प्रवाहित हुन्छन् र त्यसैमा विलीन हुन्छन्। परमतत्त्व नै यस ब्रह्माण्डको सबैभन्दा क्रियाशील तत्त्व हो। सबै क्रियात्मकताहरू परमतत्त्वमै निहित हुन्छन्। यो नै त्यो दुर्लभ तत्त्व हो जसलाई प्राप्त गरेर व्यक्तिले यस मायाजालले ग्रस्त संसारमा एकाग्रचित्त हुन सक्छन्। यसैका प्राप्तिका लागि देवता, किन्नर, मनुष्य सबै साधनारत हुन्छन्। निखिलेश्वरानन्द गुरुदेवको अवस्था परमहंसको अवस्था हो अर्थात् पूर्णताको अवस्था, स्वयंमा मस्त रहने अवस्था, स्वयंमा परमानन्दमा रहने अवस्था। यही अवस्था उहाँले आफ्ना शिष्यहरूलाई दीक्षाको माध्यमबाट दिनुहुन्छ। यही परमतत्त्वले नै उहाँका शिष्यहरू अरूभन्दा बेग्लै हुन्छन्। उनीहरू भट्किनबाट मुक्त हुन्छन्। निखिलेश्वरानन्द एउटा सर्वज्ञ अध्यात्मस्वरूप हो–एउटा यस्तो विलक्षण आध्यात्मिक स्वरूप जो शारीरिक प्रपञ्चहरूबाट सर्वथा मुक्त हुन्छ। उहाँ अशरीर हुनुहुन्छ। जब कुनै शिष्यले पुकार्दछ, उहाँ साक्षात् प्रकट हुनुहुन्छ। वास्तवमा पूजनीय, दर्शनीय र हृदयमा स्थापना गर्न योग्य निखिल तत्त्व नै हो परमतत्त्व। उहाँको यो विराट् एवं गोपनीय आध्यात्मिक स्वरूप अनेक स्थलहरूमा एकैसाथ प्रकट हुन सक्दछ। लाखौँ भक्त एवं शिष्यहरूलाई उहाँ प्रतिदिन संस्पर्श गर्नुहुन्छ। अचानक उहाँ ब्रह्ममुहूर्तमा एकैसाथ हजारौँ शिष्यहरूको घरमा पुगेर दर्शन दिनुहुन्छ, कुराकानी गर्नुहुन्छ र कुनै शिष्य अप्ठ्यारोमा परेको भए उसको एउटै प्रार्थनामा त्यस कार्यलाई क्षणमै समाधान गर्नुहुन्छ। उहाँका प्रत्येक शिष्य उहाँको निखिलत्वमा समाहित छन्। शिष्यको हृदयमा उहाँ नित्य नयाँ भावले स्थित हुनुहुन्छ। उहाँको कुनै पनि शिष्यलाई निखिलेश्वरानन्दको कमी महसुस हुँदैन। निखिल शिष्यहरू प्रपञ्चमा अल्झिँदैनन्। उनीहरूलाई आफ्नो गुरुको मायाजाल राम्ररी थाहा हुन्छ। लाखौँ व्यक्तिहरूको माझमा निखिलेश्वरानन्द गुरुदेवको शिष्यलाई चिन्न सकिन्छ किनकि उसलाई आफ्नो गुरुको सक्षमता थाहा हुन्छ।

जसले निखिल तत्त्वलाई बुझ्यो, आत्मसात् गऱ्यो, चिन्यो, ऊ फेरि सानातिना तत्त्वहरुमा अल्झिँदैन। उहाँका शिष्य ध्यान, धारणा, समाधि, योग आदि प्रपञ्चहरुमा पनि अल्झिँदैनन्। उनीहरूलाई थाहा हुन्छ कि यी सबको अर्थ त मात्र परमतत्त्व, परमरसको प्राप्ति हो र जब उनीहरूलाई दीक्षाद्वारा नै निखिल तत्त्वको प्राप्ति हुन्छ भने किन चारैतिर भौँतारिने? आध्यात्मिक स्वरूप नै पूजनीय हुन्छ, परमतत्त्व नै पूजनीय हुन्छ, परमतत्त्वले नै बिग्रिएका कामहरू सपार्दछन्। त्यही नै महातत्त्व हो। जसले परिवर्तन गर्नेछ उसैबाट नै परमरसको प्रादुर्भाव हुनेछ। यति सक्षम त भगवान् श्रीकृष्णको अलावा अरू कुनै गुरु भएनन्। जब आज स्वयं निखिलेश्वरानन्द गुरुदेवले साक्षात् सङ्केत गरिरहनुभएको छ भने अर्को कुनै तत्त्वको आवश्यकता नै किन हुन्छ र? निखिल तत्त्व नै महाबीज हो, निखिल तत्त्व नै परम शान्ति हो, निखिल तत्त्वको प्राप्तिले नै व्यक्तिलाई लीलाहरुमा अल्झिन दिँदैन। निखिल तत्त्वको प्राप्ति नै आध्यात्मिक सफलताको द्योतक हो। शुभकामना नयाँ वर्ष २०६७ को। अस्तु!

१-६: लेखनाथ, कास्कीमा सम्पन्न आश्रम भवन समुद्घाटन समारोह। ७-१०:उपत्यकामा गत चैत्र महिनामा सञ्चालित विभिन्न मासिक हवन कार्यक्रमहरु। ११-१५: आध्यात्मिक नेतृत्वकर्ताहरुका लागि तालिम तथा प्रशिक्षण कार्यक्रम।

।। ॐ नमो गुरु मछिन्द्र, शब्द साँचा
पिण्ड काचा मेरा भक्ति, गुरुका शक्ति
नवनाथै जगाऊँ, चौराषीनाथै जगाऊँ
फुरो मंत्र ईश्वरो गुरु गोरख वाचा ।।

गो. हु. का. द. नं. ९/०६०/६१
का. जि. द. नं. ७०/०५६

**दुर्लभ ग्रन्थहरूको अध्ययन गरौं ।**
**मानव जीवनलाई धन्य बनाऔं ।।**